● वर्ष ९ ● अङ्क १२ ●श्रावण २०६५ ● पूर्णाङ्क १०८

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–४,
  फोन: ०६४-४२९३१८
- **कास्की**, पो.उ.म.न.पा.-
  १०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर-९, शेराबजार
- **भक्तपुर**, सूर्यविनायक,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## भगवान् शिव विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुर्‍याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं: २०७१२००, २१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), Email: gonisa@ntc.net.np

# आफ्नै कुरा

*सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रुपमा मनाउँदै आइरहेको छ। श्रावण महिनामा गोरक्ष शक्ति पृथ्वीमा प्रशस्तरुपमा क्रियाशील हुने, प्रकट हुने भएकोले यस महिनामा यी दिव्य शक्तिहरुलाई सहजरुपमा धारण गर्न सकियोस् भनेर यस संस्थाले यस गूढ रहस्यलाई समाजसमक्ष उजागर गरेको छ। हुन त हाम्रो हिन्दु धर्म संस्कृतिमा भगवान् शिवलाई सबैभन्दा ठूला देवताको रुपमा मानिँदै आएको पाइन्छ। भगवान् शिवलाई परम आराध्यदेवको रुपमा श्रद्धा, भक्ति अर्पण गर्ने गरिन्छ। यसरी हिन्दु धर्मावलम्बीहरुले पनि भगवान् श्री शिव गोरक्षको महिना नबुझे पनि, उहाँको उच्चताको बारेमा थाहा नपाए पनि, उहाँसम्बन्धी गूढ रहस्यबाट अनभिज्ञ रहे पनि भगवान् शिवको रुपमा पूजाआजा, श्रद्धा, भक्ति अर्पण गर्ने गरेको पाइन्छ। श्रावण महिनालाई शिवको महिना ठानी पूजा, आजा गर्ने, व्रत बसेर शिव आराधना गरेको पाइन्छ।*

*यसरी समाजमा भगवान् श्री शिव गोरक्षलाई बुझेर वा नबुझेर भए पनि भगवान् शिवको रुपमा आदर सम्मान गरेको पाइन्छ। गोरक्ष महोत्सवको रुपमा आदि, अनादिकालदेखि रहेको श्रावण महिना सम्पूर्ण ऋषिमुनि, योगी, स्वामी, सम्पूर्णको लागि दिव्य पर्वको रुपमा रहँदै आएको पाइन्छ। बीचमा आएर केही अपभ्रंश हुँदा समाजले शिव गोरक्ष महिनाको रुपमा रहेको श्रावण महिनालाई केवल शिव महिना भनेर मात्र बुझ्न थाले। गोरक्ष महोत्सव केवल शिव महिनामा मात्र सीमित रहन पुग्यो। यस्तो विषयमा सोधखोज, अनुसन्धानको कमीको कारण सत्यतथ्य कुराहरु ओझेलमा पर्दछन् साथै व्यक्तिहरु पनि दिव्य आशीर्वादबाट वञ्चित रहन्छन्।*

*सिद्धाश्रम शक्ति केन्द्रले यस्तो गूढ रहस्यलाई थाहा पाएर, श्रावण महिनाको दिव्यतालाई बुझेर भगवान् शिव गोरक्षको उच्चताको, महानताको उच्च सम्मान सबैले गरुन् र दिव्य कृपा आशीर्वाद प्राप्त गरुन् भनी गोरक्ष महोत्सवको रुपमा मनाउँदै आइरहेको छ र समाजमा समेत यसको गूढ रहस्यलाई उजागर गरिरहेको छ। भगवान् शिवका १०८ अवतारमध्ये सर्वाधिक महत्त्वपूर्ण अवतार वा मूल स्वरुप भनेकै भगवान् श्री शिव गोरक्ष हुनुहुन्छ। त्यसैले पनि उहाँको उच्चतालाई बुझौं, सत्यतथ्यलाई आदर मानी अगाडि बढ्दा वास्तविक कृपा प्राप्त गर्न सजिलो पर्दछ। हुन त शिव रुपमा मानेर पूजाआजा, व्रत, उपासना गर्दा पनि भगवान् शिव गोरक्षलाई मानेकै बराबर हुन्छ, उहाँलाई नै पुकारेको ठानिन्छ। यसैले शिव गोरक्ष स्वरुपको उच्चता, महानतालाई बुझौं, जीवनलाई पूर्णतातर्फ अग्रसर गराऔं।*

*यसपालिको अंकलाई हामीले 'भगवान् शिव विशेष'को रुपमा यहाँहरुसमक्ष ल्याएका छौं। भगवान् शिवको विराटता, उहाँको उच्चता शब्द चर्चाको परिधिभित्र समेटिने विषय नै होइन। हिन्दुहरुका परम आराध्यदेव भगवान् शिवका विभिन्न स्वरुपहरु छन्, विभिन्न शक्तिरुपमा उहाँको प्रकटीकरण सबैका लागि गूढ रहस्यले भरिपूर्ण रहँदै आएको छ। त्यसैले यस्ता गूढ रहस्यले भरिपूर्ण परम आराध्यदेव भगवान् शिवका बारेमा हामीले केही अंशलाई मात्रै समेट्ने कोशिश गरेका छौं। यहाँहरुले भगवान् शिवलाई प्राप्त गर्न केही सजिलो होस् भनी यस अंकलाई हामीले त्यही रुपमा यहाँहरुसमक्ष ल्याएका छौं। महानतम एवं गहनतम विषयमा केही लेख्दा अधुरो र अपूरो अवश्य हुनसक्छ त्यसैले जे जति सामग्रीहरु उल्लेख गर्न सकियो, त्यसबाट फाइदा लिनेतिर यहाँहरु उन्मुख हुनुहुनेछ भन्ने हामीले आशा लिएका छौं। अन्तमा यस अंकमा भए गरेका गल्ती, कमी, कमजोरीको लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमा याचना गर्दै आवश्यक सल्लाह सुझावको अपेक्षा गर्दछौं।*

*अस्तु!*

# रसेश्वर दीक्षा र पारदेश्वर शिवलिङ्ग

जीवनमा ती व्यक्तिहरू सौभाग्यशाली हुन्छन् जो भगवान् शिवको आराधनामा प्रवृत्त हुन्छन् । तिनीहरूको जीवन धन्य छ जसले आफ्नो जीवनमा भगवान् पारदेश्वरको दर्शन गरेका छन् । तिनीहरूका माता पनि धन्य छन् जसले यस्ता पुत्ररत्नलाई जन्म दिए जो भगवान् पारदेश्वरको आराधनामा रत रहन्छन् । वास्तवमा नै जीवनको सौभाग्य, जीवनको पूर्णता र जीवनको श्रेष्ठता यस कुरामा निहित छ कि हामीले कमसेकम एकपटक आफ्नो घरमा भगवान् पारदेश्वरको विग्रहलाई स्थापित गरौं । उहाँमा प्रक्षालित जललाई आफ्नो शरीरमा छर्कन सकियोस्, उहाँलाई धोएको जलको अमृतपान गर्न सकियोस् । यसप्रकार आफ्ना मानसिक र आध्यात्मिक पवित्रतालाई उठाएर जीवनको त्यस उचाइलाई स्पर्श गर्न सकियोस् जहाँ जीवन सौभाग्यशाली बन्दछ, जसबाट जीवन जाज्वलमान बन्दछ, जसबाट जीवन अद्वितीय बन्दछ । यस लोकमा अत्यन्त नै महत्त्वपूर्ण कुरा यो बताइएको पाइन्छ कि जीवनको सौभाग्य पारदेश्वरको दर्शन गर्नुमा छ ।

पारदेश्वरको बारेमा सम्पूर्ण शास्त्रमा सयौं कुरा लेखिएको पाइन्छ । सयौं कुरा यस कुराको प्रमाण हो कि पारद एउटा प्रभावशील पदार्थ हो । जब यसमा स्वर्णग्रास दिइन्छ, जब स्वर्णग्रास दिएर पारदलाई अत्यन्त दिव्य एवं भव्य बनाइन्छ र यसप्रकारको स्वर्णग्रास दिइएको पारदलाई आबद्ध गरेर शिवलिङ्गको निर्माण गरिन्छ भने यस्तो शिवलिङ्ग संसारकै दुर्लभ शिवलिङ्ग हुन्छ । यसप्रकारको शिवलिङ्गलाई घरमा स्थापना गर्नु नै सौभाग्य हो । यस्तो शिवलिङ्गको पूर्णता नै जीवनको पूर्णता हो । रावणसंहितामा स्पष्टरूपमा विवेचना गरिएको छ– रावणले भगवान् शिवलाई प्रसन्न बनाउन खोज्दा पनि सकेनन् । अत्यन्तै प्रयत्न गरेर पनि भगवान् शिवको सायुज्य प्राप्त गर्न सकेनन् । जब शिवको सान्निध्यता उपलब्ध भएन तब उनले आफ्ना गुरुसँग कुन प्रकारले भगवान् शिवलाई प्रसन्न पार्न सकिन्छ भन्ने याचना गरे । गुरुले पनि पारदेश्वरको बारेमा विस्तारपूर्वक विवेचना गरेर सम्झाए कि भगवान् शिवको दर्शन गर्ने एक मात्र प्रयत्न पारदेश्वरको स्थापना मात्र हो । अत्यन्तै शुद्ध, लौहरहित, शुभ्र, दिव्य पारदलाई लिएर रसेश्वर दीक्षाबाट सम्पन्न गुरु जसले आफ्नो जीवनमा रसेश्वर दीक्षा अरुलाई पनि दिएका छन्, यस्तो उच्चकोटिको पारदलाई लिएर त्यसलाई आबद्ध गर्ने क्रिया सम्पन्न गरोस् र पारदलाई ठोस बनाएर निरन्तर त्यसलाई बत्तीसपटक स्वर्णग्रास दिइयोस् ।

यस्तो स्वर्णग्रास दिइएको पारद आफैमा अत्यन्तै भव्य एवं दर्शनीय बन्दछ । यसका साथै अर्को एउटा कुरा पनि महत्त्वपूर्ण हुन्छ कि यस्तो गुरु जसलाई पारद आबद्ध गर्ने क्रिया आउँदैन र जसले जीवनमा पारदलाई आबद्ध गरेको छैन, जसले पारदमा स्वर्णग्रास दिने क्रिया जान्दैन, यस्तो गुरु जसले रसेश्वर दीक्षा प्रदान गरेको छैन, यस्तो व्यक्तिले पारदेश्वर विग्रहलाई निर्माण गर्न पनि सक्दैन, त्यसको स्थापना पनि गर्न सक्दैन । तर जसलाई यसबारेमा ज्ञान छ, जसलाई यस कुराको चिन्तन छ, त्यसले यसप्रकारको पारदेश्वरको निर्माण गर्न सक्दछ । रावणसंहितामा एक स्थानमा प्रष्टरूपमा लेखिएको छ कि पुष्य नक्षत्र होस्, पूर्णा तिथि होस्, भगवान् शिवको सायुज्य नक्षत्र होस्, चन्द्रमा वाम होस् र अग्निकोणमा लक्ष्मी स्थापित होस्, यस्तो अद्‌भुत संयोगको क्षणमा पारदलाई आबद्ध गरियोस् ।

भगवान् शिवका बत्तीस नाम छन्, भगवान् शिवका बत्तीस रूप छन्, भगवान् शिवका बत्तीस विग्रह छन् । यसप्रकार आबद्ध गर्दा बत्तीसपटक पारदमा स्वर्णग्रास दिइयोस् । यसप्रकार जुन पारद आबद्ध गरिन्छ त्यो पूर्णरूपमा यसप्रकारको शिवलिङ्गको निर्माणमा सहायक हुन्छ । स्मरण राख्नुपर्दछ कि यही क्षण विशेषमा नै पारदलाई आबद्ध गर्नुपर्दछ र क्षण विशेषमा नै पारदमा स्वर्णग्रास दिइयोस् किनकि स्वर्णग्रास दिने समयमा यस कुराको मनन गरियोस् कि प्रत्येक त्यस क्षणलाई गुरुले समातोस् जुन क्षण विशेषमा लक्ष्मी आफैमा पूर्ण चैतन्य होस्, किनकि एक घण्टामा दुईपटक लक्ष्मी चैतन्य हुन्छिन् । यदि त्यस क्षण विशेषमा स्वर्णग्रास दिइन्छ भने त्यस शिवलिङ्गमा लक्ष्मी स्वयं स्थापित हुन्छिन् । यसप्रकार पूरै सोह्र घण्टा यस प्रक्रियालाई सम्पन्न गरियोस् । यसप्रकार प्रत्येक घण्टामा दुईपटक लक्ष्मी चैतन्य हुने हुनाले घण्टाको दुईपटक नै स्वर्णग्रास दिइयोस् । यसप्रकार बत्तीसपटक हुन आउँछ । यसरी स्वर्णग्रासबाट पारदलाई पूर्णरूपमा आबद्ध गरेर यसप्रकारको शिवलिङ्गको निर्माण गरियोस् । शिवलिङ्गको निर्माणमा समय धेरै व्यतीत भइरहेको छ भन्ने वास्ता रहनु हुँदैन । बरु यस कुराको विशेषरूपमा ख्याल गर्नुपर्दछ कि त्यस क्षण विशेषमा भगवान् शिव र लक्ष्मी पूर्णरूपमा चैतन्य हुन्, त्यस क्षण विशेषमा नै पारद निर्माणको प्रक्रिया प्रारम्भ गरियोस् र त्यस पारदको निर्माण गरेर त्यसमाथि पुनः भगवान् शिवको बत्तीस रूपको चिन्तन गरियोस्, बत्तीस रूपलाई आबद्ध गरियोस्, बत्तीस रूपलाई त्यसमाथि स्थापित गरियोस् । र, भगवान् शिवका जुन बत्तीस रूप छन्, ती यसप्रकार छन्– सदाशिवाय नमः, रुद्राय नमः, कालाग्नि नमः, चिन्तनाय नमः, विरूपाय नमः, वैद्रवाय नमः, लक्ष्मीरूपाय नमः, कृष्णरूपाय नमः, मुक्तिरूपाय नमः, चिन्त्यरूपाय नमः, धनेश्वराय नमः, आबद्धरूपाय नमः, पूर्णत्वरूपाय नमः, चैन्त्यरूपाय नमः, क्रियमानाय नमः, कारंततनाय नमः, पूर्णशिष्याय नमः, सभामभैरवाय नमः, सचिन्त्यरूपाय नमः, पार्वतीश्वराय नमः, आबद्धलक्ष्मे नमः, अन्नपूर्णाय नमः, दीर्घरूपाय नमः, कालमुक्ताय नमः, मृत्युरूपाय नमः, गणेशरूपाय नमः, सरस्वत्येश्वराय नमः, पूर्णेश्वराय नमः, कल्याणरूपाय नमः, आबद्धरूपाय नमः, दीर्घरूपाय नमः, कल्याणात्मनाम् पुरुष्यां सा दीर्घरूपाय नमः, यसप्रकार यी सबै रूपलाई त्यसमा स्थापना गरेपछि चार विशेष रूपलाई पनि स्थापना गर्नुपर्दछ– अमृत्युरूपाय नमः, अमृतारूपाय नमः, कल्याणरूपाय नमः, पूर्णकुबेरवैश्रवणाय नमः । यसप्रकार त्यसमा छत्तीस रूपको स्थापना हुन्छ तब त्यो विग्रह आफैमा दिव्य, चैतन्य, आफैमा अद्वितीय बन्न जान्छ । यस्तो भगवान् सदाशिवको शिवलिङ्ग पाँच तोला अथवा एघार तोलाको निर्माण गर्नुपर्दछ किनकि पाँच तोलामा पंचदेवताको स्थापना हुन्छ भने एघार तोलाको शिवलिङ्गमा एकादश रुद्रको स्थापना भएको हुन्छ । यो एकादश रुद्र आफैमा सम्पूर्ण सिद्धिहरूलाई दिने हुन्छ । स्वर्णग्रास दिइएको, विशेष मुहूर्तमा निर्मित रसेश्वर दीक्षासम्पन्न गुरुले यसप्रकारको शिवलिङ्गको निर्माण गरेर त्यसमाथि भगवान् शिवका बत्तीस विशेष रूपलाई स्थापित गरेर एकादश शिवलिङ्गको निर्माण गरेर घरमा स्थापना गरियोस् र व्यक्तिलाई भगवान् शिवको साक्षात् दर्शन नहोस्– यो सम्भव नै छैन । यसमा कुनै मंत्र, तंत्र र योगको आवश्यकता पर्दैन । कुनै दर्शन पनि जरुरी छैन यसमा । यसमा भगवान् शिवको रुद्राभिषेक पनि जरुरी छैन । यसमा त केवल शिवलिङ्गलाई स्थापना गर्ने क्रिया मात्र चाहिन्छ र यस्तो शिवलिङ्गको स्थापना भएपछि निश्चितरूपमा त्यो आफैमा दिव्य रूप बन्न जान्छ । यस्तो दिव्य रूप बनेपछि त्यो पूर्णरूपमा दर्शन दिनमा समर्थ हुन्छ नै । पापीभन्दा पापी र अधमभन्दा अधम व्यक्तिले पनि यदि यस्तो शिवलिङ्गलाई घरमा स्थापना गर्दछ भने, यस्तो भगवान् सदाशिवलाई आफ्नो घरमा स्थापना गर्दछ भने निश्चय भगवान् शिवले उसलाई प्रत्यक्ष दर्शन दिएर पूर्णत्व प्रदान गर्नुहुन्छ किनकि त्यसमा ती सबै रूप समावेश छ जुन रूपको माध्यमबाट भगवान् सदाशिव प्रसन्न हुनुहुन्छ ।

रावणसंहितामा त्यस अतुलनीय धन, वैभव र ऐश्वर्यलाई प्राप्त गर्नका लागि पनि एउटा विशेष प्रयोग दिइएको पाइन्छ– पारद शिवलिङ्गको । रावण आफैमा अत्यन्तै शक्तिशाली र अद्वितीय विद्वान् थिए । उसले स्वयं भगवान् शिवसँग पारदेश्वरको निर्माणको प्रक्रिया सिकेका थिए । उनले स्वयं त्यस विशेष विधिबाट पारदेश्वरको निर्माण गरेका थिए, पारदलाई आबद्ध गरेका थिए, पारदका आठै संस्कार सम्पन्न गरेका थिए र प्रत्येक संस्कारमा लक्ष्मीलाई आबद्ध गरेका थिए । यसप्रकार शिवलिङ्गको निर्माण गरेपछि लक्ष्मीको सुगन्धित रूपलाई लिएर त्यसमा ती लक्ष्मीहरूको आवाहन गरियोस् र स्थापना गरियोस् । रावण भन्दछन् कि यस्तो शिवलिङ्गमा यदि बत्तीस रूपमा भगवती लक्ष्मीलाई स्थापना गरिन्छ भने यस्तो शिवलिङ्ग दुर्लभ मानिन्छ । यसप्रकारको शिवलिङ्गको कल्पना र तुलना हुनै सक्दैन । यस्तो शिवलिङ्गको दर्शन गर्नु नै आफैमा असाध्य हो । यस्तो शिवलिङ्गलाई देख्दा मात्र पनि समस्त जीवनका पाप काटिन्छन् । यस्तो शिवलिङ्गलाई स्थापना गर्नाले, यस्तो शिवलिङ्गको दर्शन गर्नाले व्यक्तिले आफ्नो जीवनमा गौहत्या गरेको भए

पनि, ब्राह्मणहत्या गरेको भए पनि, अत्यन्त आक्रान्त पापबाट भरिएको भए पनि यस्तो शिवलिङ्गको दर्शन गर्दैमा उसका समस्त पाप क्षय हुन्छन्, समाप्त हुन्छन् ।

शिवस्तोत्रमा एक ठाउँमा स्पष्टरूपमा बताइएको छ– केदारनाथदेखि लिएर समस्त पृथ्वीमा जति पनि भगवान् शिवका मन्दिर छन्, भगवान् शिवका जति पनि क्षेत्र छन्, जति पनि भगवान् शिवका पुण्यस्थल छन्, ती सबै पुण्यस्थल र क्षेत्रको दर्शन गर्दा जुन पुण्य प्राप्त हुन्छ, त्यो पुण्य केवल पारदेश्वर भगवान् शिवलिङ्गको दर्शन गर्नाले मात्रै पनि प्राप्त हुन्छ । रावणले एक स्थानमा भनेका छन्– किन तिमी एक-एक स्थानमा अवस्थित मन्दिरहरूको दर्शन गर्दछौ, किन केदारनाथ, बद्रीनाथ अन्य स्थानमा जान्छौ ? पारदेश्वर शिवलिङ्गमा त समस्त पृथ्वीका शिवलिङ्गहरूको समावेश हुन्छ । त्यसमा ती सबै गुण र चिन्तनहरूको समावेश हुन्छ । पूर्व जीवन र यस जीवनको पुण्यको कारणबाट त्यो प्राप्त हुन्छ । त्यसैले आफ्नो घरमा एघार तोलाको शिवलिङ्गको निर्माण गर्नु र स्थापना गर्नु नै जीवनको पूर्णता हो, श्रेष्ठता हो किनभने यस्तो शिवलिङ्ग अत्यन्त दुर्लभ छ, अत्यन्तै कठिन छ र प्राप्त हुनु नै दुष्कर छ । यस्तो शिवलिङ्गको प्रक्रियामा नै बत्तीस लक्ष्मीलाई स्थापना गरिन्छ । प्रत्येक स्वर्णग्रास दिने समय र प्रत्येक हीरक ग्रास दिने समयमा नै एक श्रेष्ठ गुरुले आफ्नो प्रक्रिया अघि बढाउनु हुन्छ । हीरक ग्रास दिने समयमा प्रत्येक हीरक ग्रासमा एक-एक लक्ष्मीको आवाहन गरेर, न्यास गरेर त्यसमा स्थापना गर्ने क्रिया गरिन्छ । यसप्रकार लक्ष्मी पूर्णरूपबाट त्यसमा आबद्ध हुन्छिन् । र, बत्तीस रूपमा स्थापित लक्ष्मी पूर्ण रूपबाट लक्ष्मीप्रदायक, धनधान्यप्रदायक, श्रेष्ठताप्रदायक बन्दछ । रावणसंहितामा स्वयं रावणले भनेका छन्– भगवान् शिवले भन्नुभए जस्तै गरी मैले बत्तीस लक्ष्मीलाई यस पारदेश्वरमा बसाएको छु । सदाशिव रावणलाई सम्झाउँदै बताउनुहुन्छ– यदि तिमीलाई स्वर्णमय लङ्का बनाउनु छ, यदि तिमीलाई अतुलनीय भण्डार वैभव प्राप्त गर्नु छ भने, यदि जन्म-जन्मको दरिद्रता समाप्त गर्नु छ भने मेरो यस्तो पारदेश्वर विग्रहमा बत्तीस प्रकारका लक्ष्मीलाई आबद्ध गर र त्यस प्रकारबाट र त्यस समयमा आबद्ध गर जब त्यसमा हीरकग्रास दिइन्छ । जब तिमी स्वर्णग्रास दिन्छौ तब मेरा विभिन्न रूपलाई त्यसमा आबद्ध गर । तिमी जब त्यसमा हीरक ग्रास दिन्छौ तब लक्ष्मीका बत्तीस स्वरूपलाई पनि त्यसमा आबद्ध गर जसबाट कैयौँ पुस्तासम्म पनि त्यसमा लक्ष्मी आबद्ध हुन सकोस् । रावणसंहितामा त्यस बत्तीस लक्ष्मीको स्वरूपको चिन्तन पनि दिइएको छ । यी बत्तीस प्रकारका लक्ष्मीहरूमा समस्त संसारको वैभव, यश, सम्मान, प्रतिष्ठा र पूर्णता प्राप्त हुन्छ । तर यसको यो चिन्तन छ, यसको यो विचार छ, यसको यो धारणा छ कि यस प्रकारको शिवलिङ्गको निर्माण गर्नु कुनै महत्त्वपूर्ण छैन । महत्त्वपूर्ण त यो छ कि त्यसमा कुन क्षण विशेषमा भगवान् शिवको विग्रहलाई स्थापना गर्ने । शिवलिङ्गको निर्माणमा र प्रत्येक घण्टामा दुईपटक भगवान् सदाशिव जागृत हुनुहुन्छ र दुईपटक लक्ष्मी चैतन्य हुन्छिन् । जुनबेला भगवान् शिव जागृत हुनुहुन्छ त्यसबेला भगवान् सदाशिवको स्वर्णग्रासलाई दिइयोस् । जुन समय लक्ष्मी चैतन्य हुन्छिन् त्यस समय हीरकग्रास दिइयोस् । यसप्रकार त्यस शिवलिङ्गमा बत्तीस स्वर्णग्रास दिइन्छ र बत्तीस हीरकग्रास दिइन्छ । यसप्रकार चौँसठ्ठी सिद्धिलाई त्यसमा समावेश गरेर एघार रुद्रसहित पारदेश्वर शिवको निर्माण गरिन्छ । यस्तो पारदेश्वरको सम्बन्धमा स्वयं सदाशिवले भन्नुभएको छ– पृथ्वीमा जति पनि स्वर्ण छ, धन छ, मेरो यस प्रकारको पारदेश्वर शिवलिङ्गको सामु तुच्छ छ । पृथ्वीमा जति पनि सम्पदा छ, यसको सामु तुच्छ छ किनकि मेरो यस्तो विग्रह नै जसको घरमा स्थापना हुन्छ म स्वयं समस्त प्रकारका लक्ष्मीलाई साथ लिएर त्यस शिवलिङ्गमा स्थापित हुन्छु र जुन शिवलिङ्गमा म स्थापित हुन्छु त्यस शिवलिङ्गको दर्शन गर्नु नै समस्त जीवनलाई पूर्णता दिनु हो, सजाउनु हो, पूर्णता प्राप्त गर्ने क्रिया हो ।

पार्वती सोध्दछिन्– यस प्रकारको शिवलिङ्गको स्थापनाबाट के प्राप्त हुन्छ ? भगवान् सदाशिव प्रसन्न भएर भन्नुहुन्छ– तिमी जान्दिनौ कि यस प्रकारको शिवलिङ्गको प्राप्ति अत्यन्त कठिन र दुष्कर छ । समर्थ र योग्य गुरुले नै यसप्रकारको शिवलिङ्गको निर्माणको प्रक्रिया सम्पादन गर्न सक्दछ । गुरुलाई थाहा हुन्छ कि कुन विशेष मुहूर्त हो भनेर, गुरुलाई पारदको आठै संस्कारको ज्ञान हुन्छ, गुरुलाई पारदलाई आबद्ध गर्ने क्रियाको ज्ञान हुन्छ, उहाँलाई रजतयुक्त पारदलाई, शुभ्र श्वेत पारदलाई, तरल प्रवहमान पारदलाई आबद्ध गर्ने क्रिया थाहा हुन्छ । उहाँलाई यो पनि थाहा हुन्छ कि यस पारदमा कुनै प्रकारको लौह तत्त्व नरहोस् । र, लौहरहित शुद्ध पारदमा विशेष मुहूर्तमा त्यसलाई निर्माण गर्ने प्रक्रिया प्रारम्भ गर्नुहुन्छ । यो त गुरुलाई थाहा हुन्छ कि कुन क्षणमा भगवान् सदाशिव जागृत हुन्छ, यो त गुरुलाई थाहा हुन्छ कि कुन बेला लक्ष्मी स्वयं चैतन्य हुन्छिन् । ठीक समयको पहिचान गरेर विशेष मन्त्रको माध्यमबाट भगवान् सदाशिवलाई त्यसमा स्थापना गर्नुहुन्छ । त्यस विशेष क्षणलाई समातेर भगवान् पारदेश्वर विग्रहमा भगवती लक्ष्मी चेतनयुक्त स्थापित गर्नुहुन्छ । एक-एक रूपमा भगवान् सदाशिव र लक्ष्मीलाई स्थापित गर्दै एकादश रुद्रलाई पूर्णता दिने प्रयत्न गर्नुहुन्छ । यस कलिकालमा चाहे व्यक्तिले लक्ष्मीका हजारौँ साधना गरोस्, चाहे भगवान् शिवका सयौँ स्तुति गरोस्, चाहे रुद्राभिषेकको एक लाख पाठ गरोस्, चाहे वैभवस्तोत्रको एक लाख पाठ गरोस्, यति सबै गर्दा पनि त्यति महत्ता प्राप्त हुँदैन जति एकपटक भगवान् पारदेश्वर शिवको दर्शन गर्दा प्राप्त हुन्छ । यसप्रकार भगवान् शिवको पारदेश्वर विग्रहको दर्शन गर्दा नै पूर्वजन्मका समस्त दोष र पाप काटिन्छन् । यस प्रकारको भगवान् पारदेश्वरको दर्शन गर्नाले गुरुको सामीप्यता प्राप्त हुन्छ । यस्तो दर्शन मात्रले पनि भगवान् सदाशिवको प्रत्यक्ष दर्शन सम्भव छ । यस पारदेश्वर शिवको विधिवत् पूजन गर्नाले निश्चय नै आफ्नो पूर्ण स्वरूपमा भगवती पार्वतीका साथ भगवान् सदाशिव प्रत्यक्ष रूपमा उपस्थित हुनुहुन्छ नै । जतिपटक उहाँको आवाहन गरिन्छ, त्यति नै पटक भगवान् शिवले प्रत्यक्ष दर्शन

दिनुभएर व्यक्तिको जीवनमा पूर्णता दिने प्रयास गर्नुहुन्छ ।

भगवान् रामले लङ्कामाथि आक्रमण शुरु गर्दा उहाँले मनमनै भगवान् सदाशिवलाई स्मरण गर्नुभयो र भन्नुभयो– मलाई कुनै पनि हालतमा विजय प्राप्त गर्नु छ । तब भगवान् सदाशिवले एकै वाक्यमा सम्पूर्ण जीवनको संकेत दिनुभयो– तिमी निश्चय नै जीवनमा विजय प्राप्त गर्न सक्दछौ यदि मेरो बत्तीस रूप समावेश भएको पारदेश्वर विग्रहलाई स्थापना गरेर त्यसको पूजन, अर्चन सम्पन्न गर्दछौ भने । यसप्रकारको शिवलिङ्गको निर्माण स्वयं हनुमान्ले सम्पन्न गरे र स्वयं रामले त्यसको विधिवत् पूजन, अर्चन सम्पन्न गर्नुभयो । यस पूजन, अर्चनको माध्यमबाट नै रामले त्यस अद्भुत, श्रेष्ठ, कठीन र दुर्धष रावणलाई पराजित गरेर जीवनमा विजय प्राप्त गर्न सक्नुभयो । त्यसैले जीवनको सौभाग्य पारदेश्वरलाई प्राप्त गर्नुमा छ किनकि त्यस पारदेश्वरको एकादश रूपमा आफ्नो जीवनको समस्त सम्बन्ध समावेश हुन्छ । कल्याणरूपाय नम: त्यसको एउटा विग्रह हो जसको काम समस्त जीवनलाई कल्याणमय बनाउनु हो । लक्ष्मीरूपाय नम:– भगवान् सदाशिवको दोस्रो विग्रह हो समस्त जीवनलाई धनधान्यले पूर्णता दिनु । यशर्वै नम: समस्त जीवनमा यश र सम्मान र पूर्णता प्राप्त हुने क्रिया हुनु । अमृत्युर्वे नम: यस जीवनमा अकाल मृत्यु हुँदै नहोस्, आफ्नो मात्र होइन, आफ्नो परिवारका कुनै सदस्यको पनि अकाल मृत्यु नहोस् । पुत्रपौत्राय नम: जीवनमा वंशवृद्धि निरन्तर हुँदै रहोस् । धनेश्वराय नम: धनको अक्षय भण्डार कुबेर व्यक्तिको घरमा स्वयं स्थापित होस् । दीर्घरूपाय नम: व्यक्तिको जीवनमा जे इच्छा, कामना र भावना छ त्यसको पूर्णता हुन सकोस् । सिद्धर्वै नम: व्यक्तिलाई जीवनमा सम्पूर्ण सिद्धिको प्राप्ति होस्, उसलाई भगवान् शिवको साक्षात् रूपमा दर्शन हुन सकोस्, लक्ष्मी स्वयं उसको घरमा स्थापित हुन सकोस् र जब चाहना हुन्छ तब लक्ष्मीलाई दर्शन गर्न सकियोस् । पूर्णरूपाय नम: एकादश रुद्रको चिन्तन हो कि सबै दृष्टिबाट व्यक्तिलाई पूर्णता प्राप्त होस् । यसप्रकार एउटै शिवलिङ्गमा समस्त रूपको समावेश जीवनको दुर्लभता हो, जीवनको श्रेष्ठता हो, जीवनको अनुपमेयता हो । स्वयं भगवान् सदाशिव भन्नुहुन्छ– यस जीवनमा नै पूर्णता प्राप्त गर्नु छ भने, यस जीवनमा यदि सिद्धिहरू प्राप्त गर्नु छ भने, यस जीवनमा लक्ष्मीको साक्षात् रूपलाई देख्नु छ भने, यस जीवनमा आफ्नो घरमा समस्त प्रकारका लक्ष्मीलाई आबद्ध गर्नु छ भने, स्थापित गर्नु छ भने, यस रूपमा मेरो साक्षात् दर्शन गर्नु छ भने र यस जीवनमा आफ्ना समस्त कामनाको पूर्ति गर्नु छ भने निश्चय नै व्यक्तिले प्रयत्न गरेर यस्तो गुरुको खोजी गर्नुपर्दछ जसलाई पारद सिद्धि प्राप्त भइसकेको छ । यस्तो गुरु जसलाई पारदलाई आबद्ध गर्ने क्रियाको ज्ञान होस्, यस्तो गुरुको खोजी हुनु आवश्यक छ जसले पारदलाई आबद्ध गरेर शिवलिङ्गको निर्माण गर्न सक्नुहुन्छ । उहाँलाई ज्योतिषको पूर्ण ज्ञान हुनु पनि आवश्यक छ जसबाट क्षण विशेषको पहिचान गर्न सकियोस् । त्यस क्षण विशेषमा जब भगवान् सदाशिव चैतन्य हुनुहुन्छ र त्यसबेला भगवान् सदाशिवलाई स्थापना गर्न सकियोस्, लक्ष्मी चैतन्य भएको समयमा लक्ष्मीलाई त्यसमा आबद्ध गर्न सकियोस् । यसप्रकार पारदेश्वर शिवलिङ्गमा एकादश रुद्रलाई स्थापित गर्न सकियोस् । यसप्रकारबाट स्थापित पारदेश्वर शिवलिङ्ग आफैमा दुर्लभ र अद्वितीय बन्न जान्छ । जो आफ्नो घरमा यसप्रकारको पारद शिवलिङ्गलाई राख्दछ उसको जीवनमा कुनै प्रकारको पनि कमी रहनै सक्दैन किनकि जब व्यक्तिले यस चिन्तनलाई अँगाल्दछ कि मलाई आफ्नो घरमा पारदेश्वरलाई स्थापना गर्नु नै छ त्यस क्षण विशेषबाट नै प्रत्येक क्षण उसलाई राजसूय, अश्वमेध यज्ञ गरे बराबर फल प्राप्त भइरहन्छ र त्यसले जीवनमा समस्त कामनाहरूको पूर्ति गर्दछ जुन उसको जीवनको अभीष्ट, इच्छा हो । शास्त्रमा यो पनि स्पष्ट रूपमा बताइएको छ कि रसेश्वर दीक्षाबाट सम्पूर्ण जीवन प्रकाशित र जगमगाहटपूर्ण हुन्छ ।

रसेश्वर दीक्षाको बारेमा अत्यन्त

## भगवान् शिवका अनेक नाम र तिनका शाब्दिक अर्थ

अमरकोषका अनुसार भगवान् शिवका ४८ नाम र तिनका शाब्दिक अर्थ निम्न प्रकार छन्–

| | |
|---|---|
| पशुपति | सबै प्राणीका मालिक |
| शंकर | कल्याणकारक |
| महादेव | ठूला देवता |
| श्रीकण्ठ | शोभायमान घाँटी भएका |
| चन्द्रशेखर | शिरमा चन्द्रमा भएका |
| शिव | कल्याणकारी |
| शम्भु | सुख र आनन्द दिने |
| महेश्वर | ठूला मालिक |
| ईश | ईश्वर |
| शुली | त्रिशुलधारी |
| ईश्वर | मालिक |
| शर्व | भक्तहरूका पापनाशक |
| ईशान | ज्योति भएका स्वामी शासक |
| भूतेश | प्राणीका मालिक |
| खण्ड परशु | वन्चराले टुक्रा पारिएको |
| गिरीश | पर्वतका ईश्वर |
| गिरिश | पर्वतमा सुत्ने |
| मृड | सुख पाउने |
| मृत्युञ्जय | मृत्युलाई जित्ने |
| कृतिवासा | छालाको वस्त्र धारण गर्ने |
| पिनाकी | धनुधारी |
| प्रमथाधिप | प्रमथगणका मालिक |
| उग | प्रचण्ड कपर्दी जटाजूटवाला |
| शितिकण्ठ | कण्ठमा विष भएका |
| कपालमृत् | खप्पर धारण गर्ने |
| वामदेव | उत्तम देवता |
| विरूपाक्ष | विरूप आँखा भएका |
| कृशा नुरेता | अग्निमा वीर्य स्थापन गर्ने |
| सर्वज्ञ | सब थोकको ज्ञान भएका |
| धूर्जति | भारी जटा भएका |
| नीललोहित | नीलो र रातो कण्ठ भएका |
| हर | नष्ट गर्ने |
| स्मरहर | कामदेवलाई नष्ट गर्ने |
| भर्ग | नाश पार्ने |
| अम्बक | तीन आँखा भएका |
| त्रिपुरान्तक | त्रिपुरानामक असुरलाई मार्ने |
| गंगाधर | गंगा धारण गर्ने |
| अन्धरिपु | अन्धकनामक दैत्य शत्रु |
| ऋतुध्वंसी | दक्ष प्रजापतिको यज्ञलाई नष्ट गर्ने |
| वृषध्वज | झण्डामा साँढेको चिन्ह भएका |
| व्योमकेश | आकाशमा केश छरिएका |
| भव | जसबाट सबै हुन्छ |
| भीम | भयङ्कर |
| स्थाणु | ठूटा रूपमा रहने |
| रुद्र | रुवाउने डरलाग्दो भयानक |

गोपनीय चिन्तन र विचार ग्रन्थहरूमा दिइएको पाइन्छ । संसारमा अत्यन्तै थोरै मात्रामा यस्ता गुरु भेटिन्छन् जसलाई रसेश्वर दीक्षा प्राप्त छ र अत्यन्त विरलै गुरु हुनुहुन्छ जसलाई रसेश्वर दीक्षा दिने ज्ञान छ । उसैलाई श्रेष्ठतम गुरु मानिन्छ जसले पूर्णताका साथ आफ्ना शिष्यलाई रसेश्वर दीक्षा दिन सकोस् किनकि रसेश्वर दीक्षाको बारेमा स्वयं भगवान् शिवले भन्नुभएको छ– जसलाई रसेश्वर दीक्षा प्राप्त हुन जान्छ त्यो सम्पूर्ण पुरुष बन्दछ । उसको जीवनमा धन, धान्य, यश, सम्मान र कीर्तिको कुनै कमी रहँदैन । उसको जीवनमा वैभव र सम्पदाको अभाव रहँदैन । त्यसले आफ्नो जीवनमा पूर्ण सिद्धि प्राप्त गर्दछ नै । यस दीक्षाबाट सम्पूर्ण रोम-रोम, अणु-अणु जागृत हुन जान्छ । शरीरका समस्त क्रिया चैतन्य हुन जान्छन् । शरीरको प्रत्येक अणु र परमाणु आफैमा जागृत र क्रियमाण हुन्छ किनकि रसेश्वर दीक्षाबाट शिखादेखि पाउसम्म र पाउदेखि शिखासम्म सम्पूर्ण शरीर आफैमा चैतन्य र प्रभावित बन्न जान्छ किनकि रसेश्वर दीक्षामा जब गुरुले साधक वा शिष्यलाई दीक्षा दिनुहुन्छ तब उसको प्रत्येक रोमकूपलाई स्पर्श गर्नुहुन्छ, उसको शरीरको प्रत्येक अंगलाई चैतन्य गर्नुहुन्छ, उसको शरीरको रोम-रोम, अणु-अणुलाई जागृत र चैतन्य गर्नुहुन्छ । यसप्रकार उसको शरीरमा समस्त सुप्तक्रियाहरू पनि जागृत हुन्छन् । शिखादखि पाउसम्म र पाउदेखि शिरसम्म जति पनि शरीरका अङ्ग, अवयव छन्, चाहे ती देहगत हुन् वा चाहे आत्मगत हुन् वा चाहे प्राणगत हुन्, ती समस्त अङ्गलाई पूर्णरूपमा जागृत र चैतन्य गर्दछ । शिवपुराणमा बताइएको छ कि यदि कुण्डलिनी दीक्षा प्राप्त भएको छैन, यदि कुण्डलिनी जागृत भएको छैन, यदि कुण्डलिनीको पूर्ण आस्वादन गरिएको छैन, यदि प्रयत्न गरेर पनि कुण्डलिनी जागृत भइरहेको छैन, यदि मूलाधारदेखि सहस्रारसम्म सारा शरीर चैतन्य भएको छैन भने पनि विचलित हुनु जरुरी छैन किनकि केवल मात्र रसेश्वर दीक्षाबाट नै सारा शरीर चैतन्य भए लगत्तै एकसाथ पूर्णरूपमा कुण्डलिनी जागृत हुन जान्छ र सहस्रार जागृत भएपछि भूत, भविष्य र वर्तमानको साक्षात् दर्शन हुन जान्छ । यसैले भनिन्छ संसारको सबैभन्दा ठूलो पुण्य, सबैभन्दा ठूलो सौभाग्य, जीवनको सबैभन्दा ठूलो ऐश्वर्य यो हो कि हामीले यस्तो गुरुलाई प्राप्त गर्न समर्थ हुन सकौं जसले यस्तो रसेश्वर दीक्षा दिन सकोस् किनकि रसेश्वर दीक्षाबाट जीवनका समस्त गुणको प्रादुर्भाव हुन्छ, यस दीक्षाबाट समस्त पाप, कल्मष समाप्त हुन्छ, यसबाट पूर्वजन्मकृत दोष धुमिल हुन जान्छ, यस जीवनमा हामीले गरेका छल, पाप, झूट, कपट, असत्य र व्यभिचार, यस जीवनको कुनै पनि प्रकारको न्यूनता, यस जीवनमा हाम्रो शरीर जड भएको होस्, तापनि हामीले रसेश्वर दीक्षा प्राप्त गर्न सक्यौं भने ती सारा दोष समाप्त हुन जान्छन्, सारा अभाव समाप्त हुन जान्छ किनकि यसप्रकारको रसेश्वर दीक्षाबाट शरीरका रोम-रोम, अणु-अणु जागृत र चैतन्य हुन जान्छन्, मूलाधार जागृत हुन जान्छ, सहस्रार जागृत हुन जान्छ र सारा शरीर एउटा विद्युत् आभाबाट प्रकाशित हुन जान्छ । रसेश्वर दीक्षाका बारेमा भगवान् शिवले स्वयं भन्नुभएको छ– म त्यस मनुष्यमा पूर्णरूपबाट समस्त गुणहरूले युक्त भई, समस्त लक्ष्मीका साथ र समस्त अन्नपूर्णहरूका साथ स्थापित हुन्छु जसले रसेश्वर दीक्षा प्राप्त गर्दछ। यस्तो गुरु त प्राप्त हुनै सक्दैन किनकि जसले स्वयं रसेश्वर दीक्षा प्राप्त गरेको छ, उसैले नै अरुलाई रसेश्वर दीक्षा दिन सक्दछ र रसेश्वर दीक्षा दिनका लागि प्राण ऊर्जा चाहिन्छ, चैतन्यता चाहिन्छ, उसले आफ्नो शरीर र प्राणलाई शिष्यको शरीर र प्राणमा उतार्न सकोस्, उसको मूलाधारका साथै सहस्रारलाई चैतन्य गर्न सकोस्, उसका अङ्ग-प्रत्यङ्गलाई स्पर्श गर्न सकोस्, उसका प्रत्येक रोमकूपलाई जागृत गर्न सकोस्, चैतन्य गर्न सकोस्, यो हुन सकेमा मात्र पूर्णरूपमा रसेश्वर दीक्षा प्राप्त गर्न सकिन्छ। र, जब रसेश्वर दीक्षा प्राप्त हुन्छ व्यक्तिको जीवन-चिन्तन नै बदलिन्छ, उसको सारा शरीर र वैभव बदलिन्छ, उसका सारा शरीरका अङ्ग-प्रत्यङ्ग बदलिन्छन्। यदि साक्षात् पूर्ण पुरुषत्व हेर्नु छ भने, यदि अनुहारमा आभा र सम्मोहन हेर्नु छ भने, यदि अनुहारमा आकर्षण

हेर्नु छ भने, अरुलाई प्रभावित गर्ने क्षमता प्राप्त गर्नु छ भने, यदि समस्त संसारमा विजय प्राप्त गर्नु छ भने, यदि समस्त संसारमा राज्य गर्नु छ भने यो अत्यन्त आवश्यक छ कि आफ्नो जीवनमा रसेश्वर दीक्षालाई प्राप्त गरोस् । यो अत्यन्तै आवश्यक छ कि उसले यस्तो योगीलाई खोजोस्, यो अत्यन्त आवश्यक छ कि ऊ यस्तो गुरुको चरणमा रहोस्, यो अत्यन्त आवश्यक छ कि उसले गुरुको सेवा गरेर उहाँलाई प्रसन्न गरेर रसेश्वर दीक्षा प्राप्त गर्ने क्रिया गरोस् किनकि रसेश्वर दीक्षा प्राप्त गर्नासाथ उसको सारा शरीर बदलिन्छ, शरीर यौवनबाट भरिभराउ हुन्छ, वक्षस्थल पुष्ट हुन जान्छ, अनुहारमा कान्ति र ओज छाउन थाल्छ, आँखामा सम्मोहन भावना उत्पन्न हुन्छ जसबाट अरुलाई स्वत: आकर्षण गर्ने क्षमता रहन्छ र यस्तो व्यक्ति समस्त संसारमा विजय प्राप्त गर्न समर्थ हुन्छ । यसैले भनिएको छ– सिद्धि प्राप्त गर्न कुनै कठिनाइ छैन, सिद्धिलाई प्राप्त गर्नु कुनै दुर्लभ छैन, देवताहरूको दर्शन गर्नु पनि कुनै दुर्लभ र कठिन छैन । सबैभन्दा दुर्लभ त यस्तो गुरु प्राप्त गर्नु हो, सबैभन्दा ठूलो दुर्लभ त यसप्रकारको रसेश्वर दीक्षा प्राप्त गर्नु हो, सबैभन्दा कठीन कार्य त आफ्नो शरीरमा रसेश्वरीलाई स्थापना गर्नु हो । यी सबै कुरा शास्त्रका हुन् । स्वयं ब्रह्मा यो कुरा बताउनुहुन्छ– मैले सृष्टिको निर्माणको प्रक्रिया रसेश्वर दीक्षाको माध्यमबाट प्राप्त गरेको थिएँ । स्वयं भगवान् सदाशिव भन्नुहुन्छ– जसले आफ्नो जीवनमा रसेश्वर दीक्षा प्राप्त गर्दछ, त्योजस्तो त संसारमा हुनै सक्दैन । स्वयं देवता पनि उसको भाग्य देखेर ईर्ष्या गर्दछन् । एक स्थानमा पार्वतीले भनेकी छिन्– जसले आफ्नो जीवनमा रसेश्वर दीक्षा प्राप्त गर्दछ, म अन्नपूर्णाको रूपमा उसको शरीरमा स्थापित हुन जान्छु । कामदेवले आफ्नो काम अनंतरूपमा स्पष्ट रूपमा भनेका छन्– जसले रसेश्वर दीक्षा प्राप्त गर्दछ, म उसको अनुहारमा पूर्णरूपमा स्थापित हुन्छु किनकि यो मेरो प्रतिबद्धता हो । रसेश्वर दीक्षाको एउटा विधान छ कि गुरुले त्यस रसेश्वर दीक्षाको माध्यमबाट उसको आँखामा सम्मोहन देओस्, उसको अनुहारमा वशीकरण देओस्, उसको अङ्ग-प्रत्यङ्गमा उभार ल्याओस्, उसको अनुहारमा एक प्रकारको ओज देओस्, प्रकाश देओस्, चैतन्यता देओस्, विद्युत् आभा देओस् । र, यस्तो विद्युत् आभा भएपछि उसले समस्त संसारलाई सम्मोहित गर्ने प्रक्रिया जान्दछ, समस्त संसारलाई वशीकरण गर्ने क्रिया जान्दछ र जुन स्त्रीलाई यो सिद्धेश्वरी अथवा रसेश्वरी दीक्षा प्राप्त हुन्छ त्यस्ती स्त्री त संसारमा अत्यन्त दुर्लभ हुन्छे । विश्वामित्रले भनेका छन्– मैले स्वयं मेनकालाई स्वर्गबाट उतारेर रसेश्वर दीक्षा दिएँ जसको माध्यमबाट ऊ रतिकी प्रतिकृति बन्न सकी, उसले रतिमाथि विजय प्राप्त गर्न सकी । यस संसारमा मेनकासमान सुन्दर कोही बन्न सक्दैन किनकि मैले उसलाई रसेश्वर दीक्षा दिएको थिएँ । रसेश्वर दीक्षाबाट उसको अनुहारमा एक प्रकारको आकर्षण आउँछ, आँखामा सरोवरजस्तो गहिराई आउँछ, अनुहारमा आभा-विद्युत्-प्रकाश देखिन लाग्दछ, उसको शरीरबाट पद्मगन्ध प्रवाहित हुन लाग्दछ । रसेश्वर दीक्षाको यही विशेषता हो, रसेश्वर दीक्षाको यही चैतन्यता हो कि यसबाट सारा शरीरको अङ्ग-प्रत्यङ्ग चैतन्य हुन जान्छ, जागृत हुन्छ । रसेश्वर दीक्षाको मध्यकाल वा मध्यखण्ड यो हो कि त्यसमा विशेष पद्मगन्ध कमलको गन्धलाई प्रवाहित गरोस् जसबाट उसको सारा शरीरबाट पद्मगन्ध प्रवाहित भइरहोस्, र यो गन्ध जड र चेतनलाई वशीरकरण गर्न समर्थ हुन्छ । पुरुष त के, देवता पनि त्यस गन्धबाट प्रभावित हुन्छन् । यसैले त स्पष्टरूपमा बताइएको छ कि रसेश्वर दीक्षा त अत्यन्त कठीन छ । यसकारण कठीन छ कि गुरुलाई त्यस क्रियाको ज्ञान हुनु आवश्यक छ जसबाट व्यक्तिको शरीरमा त्यस पद्मगन्धलाई प्रवाहित गर्न सकियोस् । मनुष्यको शरीरमा पद्मगन्ध प्रवाहित भएपछि उसको सारा शरीर चैतन्य र जागृत हुन्छ । अझ उसको शरीरबाट बास्ना आइरहन्छ जसबाट अरुहरू प्रभावित, आकर्षित, आकृष्ट भइरहन्छन्, चुम्बकीय शक्तिमा जस्तै आबद्ध हुन्छन् । जुन स्त्रीमा यो रसेश्वर दीक्षा समावेश हुन्छ उसको शरीरको प्रत्येक अङ्ग-अङ्ग आफैमा यौवनले परिपूर्ण हुन्छ । उसको आँखामा, उसको अनुहारमा, उसको आभामा, उसको वक्षस्थलमा अद्वितीय निखार आउँछ, त्यस स्त्रीले समस्त संसारलाई समेट्ने कला जान्दछे । त्यसैले त यो स्पष्टरूपमा बताइएको छ कि रसेश्वर दीक्षा दिनु अत्यन्त कठीन कार्य हो । समर्थ गुरु जसले यसप्रकारको रसेश्वर दीक्षा प्राप्त गरेको हुन्छ, जुन गुरुलाई रसेश्वर दीक्षा दिने ज्ञान छ, उनै गुरुले अत्यन्तै प्रसन्न भएपछि मात्र रसेश्वर दीक्षा दिनुहुन्छ र जब कुनै साधक वा मनुष्यलाई रसेश्वर दीक्षा प्राप्त हुन्छ उसको जीवनमा कुनै प्रकारको अभाव रहँदैन किनकि त्यो पुरुष पूर्ण कामदेवजस्तै सुन्दर, आकर्षक, र अद्वितीय बन्दछ, भगवान् शिवजस्तै आफैमा पूर्ण पुरुष बन्दछ ।

**परमपूज्य सद्गुरुदेवको पारदेश्वर शिवलिङ्ग पूजन (भिसिडी) बाट**

# भगवान शिवको प्रादुर्भाव

चरकसंहितामा महाप्रलयपछिको स्थितिलाई उल्लेख गरेर भनिएको छ– त्यस समयमा मृत्यु र जीवन थिएन। रात्रि-दिवसको विभाग गर्ने सूर्य पनि थिएन। प्रश्न उठ्छ– त्यो समयमा के थियो ? उत्तरमा यही भनिएको छ कि त्यस समय समाधिस्थ सूत्रात्मा, श्वास-प्रश्वास रूप, कल्प, सृष्टि र प्रलय आदि व्यवहारबाट रहित, शान्त, समुद्रसमान अनन्ताकरशरूपिणी, नित्य, ज्ञानशक्ति (उमा) सँग एक अखण्ड, परिपूर्ण शिव अस्तित्वरूप क्रियावाला हुनुहुन्थ्यो। त्यस शिवको अनन्त शक्तिको कुनै एउटा भागमा माया बीज रूपमा थियो। जसरी बीजको शक्ति नित्य उमाबाट भिन्न छैन, उमा पनि आगन्तुक मायाबाट भिन्न हुनुहुन्न।

उमा शक्ति हुनुहुन्छ, नित्यस्वरूपा हुनुहुन्छ। शिव ज्ञानस्वरूप हुनुहुन्छ र निराकार हुनुहुन्छ। अपरिणामिनी शक्तिका परिचायिका परिणामिनी बीज शक्ति हो। शिव नै ब्रह्म हुनुहुन्छ। शिव नै प्रणव (ॐ) हुनुहुन्छ। जो प्रणव हो, उहाँ नै सर्वव्यापी हुनुहुन्छ। उहाँ नै अनन्त शक्तिस्वरूपा उमा (शक्ति) हुनुहुन्छ। जो उमा हुनुहुन्छ उहाँ नै तारक मन्त्र हुनुहुन्छ। उहाँ नै ॐकार हुनुहुन्छ। जुन तारकमन्त्र हो, उहाँ नै ब्रह्मविद्या हुनुहुन्छ। जो तारक हो, उहाँ नै सूक्ष्म ज्ञानशक्ति हुनुहुन्छ। जो सूक्ष्म हो, उहाँ नै शुद्ध हुनुहुन्छ। जो शुद्ध हुनुहुन्छ, उहाँ नै उमा हुनुहुन्छ। जो उमा हुनुहुन्छ, उहाँ नै ब्रह्म हनुहुन्छ, उहाँ नै अद्वितीय शिव हुनुहुन्छ। उहाँ नै ईशान हुनुहुन्छ। उहाँ नै भगवान् हुनुहुन्छ। उहाँ नै महेश्वर हुनुहुन्छ। उहाँ नै महादेव हुनुहुन्छ।

**यः ॐकारः स प्रणवः यः प्रणवः स सर्वव्यापी यः सर्वव्यापी सोऽनन्तस्तत्तारं यत्तारं तत्सूक्ष्मम्...।**

**(अर्थशिरउपरिषद्)**

श्रुतिहरूको कथन पाइन्छ कि जसमा समस्त वस्तुहरू शयन गर्दछन्, उहाँ नै शिव हुनुहुन्छ। उहाँ नै अद्वैत ज्ञान हुनुहुन्छ। उहाँ नै निराकार हुनुहुन्छ। उहाँ नै निर्विकार हुनुहुन्छ। उहाँ नै निर्गुण ब्रह्म हुनुहुन्छ। शिव जब आफ्नो स्वरूपमा रहनुहुन्छ र जब उहाँ आफ्नो शक्तिलाई क्रीडाभूत गरेर अर्थात् आफैमा समेटेर एक भएर रहनुहुन्छ तब सृष्टिको प्रादुर्भाव बन्द हुन जान्छ। पुनः आफ्नो माया वा आफ्नो शक्तिलाई अङ्गीकार गर्नुहुन्छ तब उहाँ आफ्नो स्वरूपमा स्थित हुनुहुँदै सगुण भाव धारण गर्नुहुन्छ। सगुणावस्थामा नै उहाँ विश्वस्थ हुन जानुहुन्छ। समस्त देवता नै शिवशक्ति हुनुहुन्छ। समस्त स्थावर जंगम उनै शिवशक्तिको सम्मिलित अवस्था हो। सबै देवता मिलेर एक परमात्मा हुनुहुन्छ र त्यो परमात्मा नै शिव हुनुहुन्छ।

शिव जब विस्ताररहित अद्वितीय रूपमा स्थित हुनुहुन्छ तब उहाँ विविधस्थ विलासमयी प्रकृति उहाँमा विलीन रहन्छ। शक्ति शिवमा अक्रिय, अव्यक्त रूपमा स्थित छ। शक्ति छ, तर दृश्य हुँदैन। शक्ति बाह्य क्रियाबाट रहित पनि हो। पुनः जब उनै शिव आफ्नो शक्तिलाई व्यक्त र क्रियारूपमा परिणत गर्नुहुन्छ तब उनै क्रियामयी शक्ति (प्रकृति) शिवलाई विविध रूपमा प्रकट गरेर उहाँको क्रिडाको उपकरण प्रस्तुत गर्नुहुन्छ। एक नै विविध रूप धारण गरेर आफैमा खेल्नुहुन्छ।

शिव सगुण पनि हुनुहुन्छ, निर्गुण पनि। उहाँ साकार भएर पनि निराकार हुनुहुन्छ। अपाणिपाद भएर पनि ग्रहण एवं गमन गर्नुहुन्छ। सर्वेन्द्रियगुणाभासम् भएर पनि इन्द्रियहरूबाट हीन हुनुहुन्छ। उहाँ टाढा पनि हुनुहुन्छ र समीप पनि। निर्विकल्प भएर पनि सविकल्प हुनुहुन्छ। शिव मन-बुद्धिबाट पर भएर पनि बुद्धिगम्य हुनुहुन्छ। शिव अणुभन्दा पनि परम अणु हुनुहुन्छ। महान्भन्दा पनि महान हुनुहुन्छ। शिव सृष्टि, स्थिति (पालन) र विनाश (संहार) गर्ने हुनुहुन्छ। उनै ब्रह्मा, विष्णु र शंकर हुनुहुन्छ। तीनै रूपमा स्थित एक नै शिव हुनुहुन्छ। श्वेताश्वतरोपनिषद् (६/७) मा लेखिएको छ– सर्वनियन्ताहरूका महान् नियन्ता, देवताहरूका परम देव, प्रजापति ब्रह्मादिका पनि स्वामी, स्वयं प्रकाश स्वरूप एवं पूज्य महेश्वर महारुद्र भगवान् (शिव) हुनुहुन्छ–

**तमीरवराणां परमं महेश्वरं**
**तं देवतानां परमं च दैवतम्।**
**पति पतीनां परमं परस्तात्**
**विदाम देवं भुवनेशमीऽयम्॥**

**जय गुरुदेव !**

# ब्रह्म नै शिव

**न सन्न चासच्छिव एव केवलः ।**

उपर्युक्त वाक्य वेदको हो । यसको अर्थ हो कि सृष्टि पूर्व न सत् थियो, न त असत् नै थियो, केवल शिव हुनुहुन्थ्यो ।

यो कुरा सर्वसम्मत छ कि जुन कुरा सृष्टिभन्दा पहिले थियो, त्यही जगत्को कारण हो र जो जगत्का कारण हुनुहुन्छ त्यही ब्रह्म हो ।

ब्रह्मको लक्षणका बारेमा वेद यस्तो भन्दछ–

**यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति यत् प्रथन्त्यभिसंविशन्ति तद्विजिज्ञासस्य, तद् ब्रह्म ।**

अर्थात्, भूत जसबाट उत्पन्न हुन्छ, जन्म पाएर जसको कारण जीवित रहन्छ र नाश भएर जसमा प्रविष्ट हुन्छ, यही जिज्ञासायोग्य छ र यही ब्रह्म हो ।

वेदान्तदर्शनकार भगवान् व्यासले पनि 'अथातोब्रह्मजिज्ञासा' प्रथम सूत्रमा ब्रह्मजिज्ञासाको कर्तव्यता बताएपछि 'जन्माद्यस्य यतः' सूत्रमा यसको लक्षण जगज्जन्मादिकारणत्व नै बताउनु भएको छ ।

**अस्य– यस जगत्को, जन्मादि– जन्मस्थिति–लय आदि, यतः–**

जोसँग छ, त्यो ब्रह्म हो, यस सूत्रको अर्थ हो यो ।

ब्रह्म नै जगत्मा जन्मादिको कारण हो, यस विषयमा त कसैको पनि मतभेद छैन । उनै जगज्जन्कारणत्व जुन ब्रह्मको लक्षण हो, 'न सन्न चासत्' यस श्रुतिमा त्यो लक्षण शिवमा छ भनेर बताइएको छ । कार्यको उत्पत्तिपूर्व जुन नियमेन रहन्छ त्यही कारण हो । श्रुतिका अनुसार सृष्टिभन्दा पूर्वकालमा सत् र असत् दुवै थिएनन्, केवल शिव हुनुहुन्थ्यो । सत् चेतन वस्तुलाई भनिन्छ र असत् जड वस्तुलाई भनिन्छ । यस संसारमा दुईवटा मात्र कुरा छन्– चेतन र अचेतन । जुन बेला यी दुवै थिएनन् तब शिव हुनुहुन्थ्यो । तब शिव नै त्यसको कारण हुनु पर्दछ । वेदमा जगत्को कारणको निर्देश गर्नुको यही प्रक्रिया हो ।

**यथा–नासदासान्नो सदासात्तदानीं तम आसीत्तमसा गूब्ब्हमग्रे्प्रकेतम् । इत्यादि ।**

सत् सदा एकरूप हुनेलाई भनिन्छ । असत् भन्नु परिणामको कारण नाना कालमा नाना रूप हुन् । चेतन अपरिणामी हुनाले एकरूप छ । अतः त्यो सत् कहलिन्छ । जड वस्तु परिणामी हुनाले नाना रूपमा छन्, त्यसैले त्यो असत् कहलिन्छ । जुन समयमा यी दुवै हुँदैनन्, त्यही सृष्टिपूर्वको काल हो । त्यसबेला जुन वस्तु रहन्छ त्यही सृष्टिको कारण हो । 'न सन्न चासत्' यस श्रुतिभित्र त्यस कालमा केवल शिवको सत्ता बताइएको छ । अतः शिव नै जगत्कारण हुनु पर्दछ । समस्त वेदान्तशास्त्र ब्रह्मको जगतकारण मान्दछ । त्यसैले, यो स्पष्ट छ कि ब्रह्मको नाम नै शिव हो ।

'शिव' शब्द शुभावह वा श्रेयस्कर वस्तुको वाचक हो । ब्रह्म सर्वशुभकारी वा सर्वश्रेयस्कारी छ । त्यसैले, 'शिव' शब्द ब्रह्मवाचक पनि हो । शुभार्थक 'शीङ्'

धातुका साथ 'वन्' प्रत्ययको योग हुनाले 'शिव' शब्द बन्दछ ।

ब्रह्म नै शिव हुनुहुन्छ, यसप्रकार शिवलाई जगत्का कारण बताउने श्रुतिको सङ्गति हुन जान्छ ।

यद्यपि त्रिमूर्तिअन्तर्गत देवता-विशेषका नामहरूमा पनि शिव शब्दको पाठ पाइन्छ । तथापि परब्रह्मको अर्थमा शिव शब्दको प्रयोग मुख्य र त्रिमूर्तिअन्तर्गत देवता विशेषको अर्थमा गौण मान्नु पर्दछ । जस्तो कि इन्द्रादि शब्दहरूको स्वर्गाधिप आदिको अर्थमा मुख्य र शचीपति आदिको अर्थमा गौण प्रयोग हुन्छ । यो कुरा वेदान्तदर्शनका ज्ञाता विद्वान् पुरुष जान्दछन् । वेदान्तदर्शनमा 'आकाशस्तल्लिङ्गात्', 'प्राणस्तथानुगमात्' इत्यादि सूत्रबाट आकाश, प्राण आदि शब्दहरूका मुख्य वृत्ति ब्रह्ममा सिद्ध गरेर भौतिक आकाश आदिमा गौणवृत्ति स्थापित गरिएको छ । यसैप्रकार 'शिव' शब्दको पनि परब्रह्ममा मुख्य वृत्ति र त्रिमूर्तिअन्तर्गत देवता-विशेषमा गौण वृत्ति स्वीकार गर्नुपर्दछ छ र यो युक्तिसंगत पनि छ । त्रिमूर्तिअन्तर्गत देवता-विशेष शिव संहारकर्ता मात्र मानिनु हुन्छ, सृष्टिकर्ता ब्रह्मा हुनुहुन्छ । यदि त्यसै शिवलाई उपर्युक्त वेदवाक्यअन्तर्गत 'शिव' शब्दको वाच्य मान्दा त उहाँको जगत्कर्तृत्व सिद्ध हुँदैन । अत: यस श्रुतिमा प्रतिपादित शिव त्रिमूर्तिअन्तर्गत शिव नभएर जगत्का जन्म आदिको कारण ब्रह्म नै हुनुहुन्छ– यस्तो मान्नु पर्दछ ।

कोही ब्रह्मा, विष्णु, रुद्र– यी त्रिमूर्तिहरूमा समानता मान्दछन् । कोही भने यिनमा एकलाई मुख्यत्व दिन्छन् । समानता मान्नेहरू तीनैलाई एक ब्रह्मको अंश मान्दछन् भने एकलाई मुख्यत्व दिने त्यस एकलाई साक्षात् ईश्वरका अवतार र शेष दुईलाई ईश्वरांशविशिष्ट जीवरूप मान्दछन् ।

श्रुतिका अनुसार तीनै ब्रह्मांश हुनुहुन्छ, यसमा शंका छैन । अत: ब्रह्मांशभावले हेर्दा तीनैमा समानता छ– यसमा पनि शंका रहन्न । तर तीनै मूर्तिहरूको कार्यमा भेद र तन्मूलक गुणभेद हुन जान्छ । यी तीनैको जो मूल छ, त्यो नै ब्रह्म हो । एक मूर्तिलाई प्रधानता मान्नेहरूका लागि तीनैमध्ये एक साक्षात् परमात्माको अवताररूप हो, बाँकी दुई ईश्वराविष्ट जीवरूप हुन् । यस पक्षमा पनि त्रिमूर्तिहरूमा मुख्य एकको अवताररूप हुनाले त्यसको पनि मूलभूत परब्रह्म हो । अत: त्रिमूर्तिअन्तर्गत शिव मुख्य नभएर तन्मूलभूत ब्रह्म नै मुख्य शिव हुनुहुन्छ । त्यो त ब्रह्म नै हो । कोही त्रिमूर्तिभन्दा पर तुरीयतत्त्वलाई शिव मान्दछन् । अर्थात्, यी तीनै मूर्तिहरूको नाम शिव हो– यस्तो मान्दछन् । यी सबै पक्षमा ब्रह्म नै शिव हुनुहुन्छ । यो सिद्धान्त अक्षुण्ण छ ।

साभार : कल्याण (शिवाङ्क)

जय गुरुदेव !

# चौंसट्ठी शिवलिङ्ग

सिद्ध ऋषि नेमुनिको क्षेत्र नेपालमा हजारौँ तीर्थ, तिनका अंश तीर्थहरू जम्माजम्मी तीन करोड पचास लाख छन् र चौँसठ्ठी लिङ्ग छन् भनेर हिमवत्खण्डमा वर्णन गरिएको छ । ती चौँसठ्ठी शिवलिङ्गहरूको नाम र भौगोलिक अवस्थितिको सूची तल प्रस्तुत गरिएको छ :

१. कुशेश्वर
पूर्व २ नं. दुम्जा
२. भीमेश्वर
पूर्व २ नं. दोलखा
३. काफीश्वर
पूर्व १ नं. बाह्रबिसे
४. काश्यपेश्वर
पूर्व १ नं. मण्ढन
५. स्फटिकेश्वर
पूर्व १ नं. फटकशिला
६. चण्डेश्वर
पूर्व बनेपा
७. धनेश्वर
पूर्व बनेपा
८. विकटेश्वर
पूर्व साँगा
९. इन्द्रेश्वर
पूर्व पनौती
१०. भालेश्वर
पूर्व बिहावर
११. गुप्तेश्वर
फूलचोकी
१२. तिलेश्वर
लेले
१३. चम्पकेश्वर
लेले
१४. रामेश्वर
लेले टीकाभैरव
१५. कालेश्वर
लेले टंगु
१६. नटारम्भेश्वर
मकवानपूर, महादेवखर्क
१७. उद्दालकेश्वर
फर्पिङ्ग यालिडोल
१८. गोपालेश्वर
फर्पिङ्ग
१९.चम्पकेश्वर
चित्लाङ्ग बिसखेल
२०. उश्वतेश्वर
टिस्टुङ खत्रीगाउँ
२१. नन्दीकेश्वर
टिस्टुङ
२२. गोखुरेश्वर
टिस्टुङ कुन्छाल कार्कीछाप
२३. पाण्डुकेश्वर
पालुङ
२४. कुटेश्वर
आगरा महादेवखर्क
२५. असितेश्वर
२४ देखि पश्चिम महादेव व्यासी
२६. भैरवेश्वर
पश्चिम १ नं. कविलास
२७. ब्रह्मेश्वर
पश्चिम १ नं. कविलास
२८. स्कन्देश्वर
पश्चिम १ नं. भिडावारी
२९. शतरुद्रेश्वर
वाग्द्वार शिवपुरी
३०. काकेश्वर
मणिचुड पूर्व कागेश्वरी
३१. मणिचुडेश्वर
मणिचुड पर्वत नजिकै
३२. योगेश्वर
साँखु बज्रयोगिनी
३३. नारायणेश्वर
साँखु लप्से गाउँ बोझेनिफेदी
३४. ज्योति लिंगेश्वर
साँखु
३५. रत्नचुडेश्वर
महादेव पोखरी (भ.पु.)
३६. वागीश्वर
भक्तपुर वागीश्वरी
३७. कोलेश्वर
भक्तपुर चाँगु
३८. वाल्मीकेश्वर
भक्तपुर हनुमानघाट
३९. मङ्गलेश्वर
भक्तपुर उलाछैं टोल
४०. विमलेश्वर
भक्तपुर सिपाडोल
४१. अनन्तेश्वर
भक्तपुर अनन्तलिङ्ग
४२. विश्वरूपेश्वर
भक्तपुर तसांगाल
४३. सोमेश्वर
भक्तपुर सोमालिंटार
४४. गोभराटेश्वर
ललितपुर लुभु
४५. त्रिलिंगेश्वर
ललितपुर शहर
४६. भृंगेश्वर
ललितपुर सुनागुठी
४७. सर्वेश्वर
ललितपुर कुम्भेश्वर
४८. कुपितेश्वर
ललितपुर शहर
४९. गोलोकेश्वर
नैकाप विशंदेवी
५०. चन्दन भराटेश्वर
थानकोट
५१. यक्षेश्वर
इचंगुनेर आदेश्वर
५२. चण्डिकेश्वर
टोखा उत्तर
५३. धर्मेश्वर
टोखा लिविकोट
५४. गोकर्णेश्वर, गोकर्ण
५५. कोटीश्वर
ललितपुर कोटेश्वर कुटिवहाल,
५६. वाणेश्वर
बानेश्वर
५७. ज्ञानेश्वर
ज्ञानेश्वर
५८. पर्वतेश्वर
पशुपति कैलाश
५९. जलेश्वर
गुह्येश्वरी घाट वाग्मती भित्र
६०. गुह्येश्वरी (सिद्धेश्वरी)
गुह्येश्वरी आँगन
६१. किरातेश्वर
गौरीघाट
६२. भष्मेश्वर
पशुपतिनिर
६३. भुवनेश्वर
देवपाटन
६४. रुद्रगारेश्वर
देवपाटन

यी चौँसठ्ठी लिङ्गबाहेक २ सय बत्तीस अरु उपलिङ्ग यहाँ छन् भनेर भाषा वंशावली साहित्यमा उल्लेख गरिएको पाइन्छ ।

स्रोतः पशुपति गुह्येश्वरी महात्म्य

## स्वप्नफल

भगवान शिव र उहाँका आभूषण, परिचरको सपना देखिएमा निम्न प्रकारका फलको प्राप्ति हुन्छ–

**त्र्यम्बकम् (शिव)**

यदि सपनामा शिवको दर्शन हुन्छ भने यसलाई शुभ मानिन्छ। यसबाट सबै पाप र विपत्तिहरूको नाश हुन्छ। जातक सुख, शान्ति, सुमति, सुख्याति प्राप्त गर्दछ।

**त्रिशूल**

सपनामा त्रिशूल देख्नु सौभाग्यको सूचक मानिन्छ। यो सबै प्रकारको भयलाई निमिट्यान्न गरेर आत्मोन्नतिमा प्रयत्नशील हुनुको संकेत हो।

**रुद्राक्ष**

सपनामा रुद्राक्ष देखिनु अत्यन्त शुभ लक्षणको प्रतीक हो। यसलाई सबै प्रकारको कल्याणको प्रतीक मान्नुपर्दछ।

**बिल्वपत्र**

यदि सपनामा बिल्वपत्र देखिन शुभ सम्झनु पर्दछ। यसलाई धनधान्य, वैभव, सुयश, प्रतिष्ठा, धार्मिक रुचि आदि वृद्धिको सूचक मानिन्छ।

**नंदीश्वर**

सपनामा भगवान् शिवका द्वारपाल (नंदी) सपनामा देखिएमा शुभ लक्षण मानिन्छ।

**तक्षक, शेषनाग**

यदि सपनामा नाग देखिएमा शुभ मान्नु पर्दछ। यो दृश्य धनागमको दृष्टिबाट अधिक सौभाग्यशाली र घरमा सुख, शान्ति रहने कुराको प्रतीक हो। सपनामा शेषनागको दर्शन पाउनु पनि मंगलकारी एवं कल्याणकारी हुन्छ।

# भगवान् शिवका आभूषण र अभिन्न अङ्ग

भगवान् शिवलाई पिनाकपाणि नामले पनि चिनिन्छ । पिनाकपाणि यस्तो शक्तिशाली धनुषवाण हो जो स्वयं भगवान् शिवले मात्र प्रयोग गर्न सक्नुहुन्छ अथवा जो स्वयं शिवस्वरूपमा अवतार प्राप्तले मात्र यसको प्रयोग गर्न सक्छ । यही शिवस्वरूपको शक्तिशाली धनुषवाणलाई राजा जनकको राजमहलमा भगवान् रामचन्द्रले उठाएर ताँदो चढाउनुभएको थियो ।

**गलामा सर्प**

सधैँ नै भगवान् शिवको गलामा साँप बेरिएर बसेको हुन्छ । यो अवस्थालाई योगीश्वरको रूपमा मानिन्छ । सर्पले न आफ्नो लागि घर बनाउँछ, न त कुनै खाने वस्तुको संचय गर्दछ, न साथमा कुनै वस्तु लिएर हिँड्छ। ऊ त खालि खुला हावा, पहाड, पर्वत, वन, जङ्गलमा घुमफिर गर्छ। ऊ सधैँ शिवको घाँटीमा बेरिएर बस्छ ।

**विभूति (खरानी)**

भगवान् शिवले आफ्नो शरीरमा विभूतिको रूपमा खरानी घस्न रमाउनु हुन्छ। त्यस्तै उहाँ श्मशानमा बसी आगोको रापभित्र बस्न अति नै मन पराउनु हुन्छ । जब उहाँ आफ्नो विशाल महाकाल रूप देखाउनु हुन्छ तब उहाँको शरीरमा श्मशानको विभूति चम्किन थाल्छ। मृत्यु शाश्वत् हो, एक दिन सबैलाई मृत्युले लैजान्छ, जीवनको सत्यता नै यही हो भन्ने सन्देश उहाँको यस क्रियाबाट हामीलाई प्राप्त हुन्छ ।

**बाघको छाला**

भगवान् शिवले न त आरामदायी मखमलजस्तो नरम कपडा प्रयोग गर्नुहुन्छ, न त उहाँले अन्य देवीदेवताहरूले प्रयोग गर्ने जस्तै सुसज्जित रङ्गीन वस्त्रहरू प्रयोग गर्नुहुन्छ। उहाँ खालि नाङ्गो शरीरमा बाघको छाला धारण गर्नुहुन्छ। बाघ दुर्गा भगवतीको वाहन हो । यसै बाघको छालाबाट शिवले शरीरमा असीम ऊर्जा प्राप्त गर्नुहुन्छ ।

**त्रिनेत्र**

भगवान् शिवको तेस्रो आँखालाई त्र्यम्बकम् पनि भनिन्छ । भगवान् शिवको दायाँ आँखाबाट सूर्यको तेज उत्पन्न हुन्छ ।

यसैगरी बायाँबाट चन्द्रमाको शीतलता प्राप्त हुन्छ । त्यसैगरी, भगवान् शिवको निधारमा तेस्रो आँखा छ जुन अति भयंकर विनाशकारी अग्नि ज्वाला हो । यस्तै, भगवान् शिवको आधा खुलेको आँखाले योगीश्वरका रूपमा परिचय दिन्छ भने तेस्रो नेत्रले संहारको संकेत गर्दछ ।

**जटा**

भगवान् शिवको शिरको जटालाई प्रचीन वटवृक्षको रूपमा मानिन्छ जो समस्त प्राणीहरूको विश्राम र वासस्थान हो । वेदांत, साङ्ख्य र योगलाई वटवृक्षको हाँगाबिँगा मानिन्छ । उहाँको जटाले पानी, वायुको वेगलाई पनि रोकेको छ ।

**अर्धचन्द्र**

पापबाट ग्रस्त भएको चन्द्रमालाई दया गरी भगवान् शिवले आफ्नो शिरमा धारण गर्नुभयो । चन्द्रमालाई आफ्नो शिरमा धारण गरेर भगवान् शिवले हामीलाई भक्तको समय चक्र र गतिशीलताबारे अवगत गराउनु भएको छ । समयअनुसार नै यो सृष्टि संचालन गर्नुहुन्छ । अत: भगवान् शिवले समयको महत्त्वलाई झल्काउनु हुन्छ । चन्द्रमा समयको प्रतीक हो । त्यसैले, उहाँले आफनो जटामा अर्धचन्द्रमा धारण गर्नुभएको छ ।

**डमरु**

शैव दर्शनमा डमरुको ठूलो महत्त्व छ । त्यसबाट निस्कने आवाजको ठूलो महत्त्व छ । वाद्ययन्त्रको रूपमा मात्रै डमरुलाई नलिएर ब्रह्माण्डको सृष्टिमा यसको महत्त्वपूर्ण भूमिका देखाएको छ । शिवका विभिन्न मूर्तिहरूमा डमरु राख्ने प्रचलन पनि छ ।

**त्रिशूल**

शिवका आयुधमध्ये प्रमुख आयुधमा त्रिशूल पर्दछ । देवताहरूको गहना आयुध र वाहनको सांकेतिक अर्थ र सम्बन्ध प्रष्टसँग देख्न सकिन्छ । सृष्टि, पालन र प्रलयको स्वरूप त्रिशूलले झल्काउँछ । ब्रह्मा, विष्णु र महेश्वरको सांकेतिक स्वरूप नै त्रिशूल हो । भैरव र शिवको मुख्य अस्त्र नै त्रिशूल हो । भगवान् शिवबाहेक अन्य देवी, भगवान् गणेशले पनि त्रिशूल धारण गर्नुहुन्छ ।

## पशुपतिनाथको बुद्धरूपमा पूजन

हरेक महिनाको चतुर्दशी तिथि भगवान् शिवको पर्व मानिन्छ । माघ शुक्ल चतुर्दशीका दिन नित्य पूजापछि भगवान् पशुपतिनाथलाई बुद्धरूपमा पूजा गर्ने र बुद्धरूप पशुपतिको छायाँ दर्शन गर्ने परम्परा छ । बाँसको चोयाबाट तीन तला पारेर बनाइएको मुकुटमा पहेँलो कपडाले ढाकी स्वर्ण मुकुटको अनुकरणमा पशुपतिनाथलाई पहिराइन्छ । मुकुट तीन तलाको बनाइनुको कारण बुद्ध स्तुपहरूमा माथि बनाइने हर्मिका (छत्र) को यो प्रतिरूप हो । भगवान् पशुपतिलाई बुद्धरूपमा उपासना गरिने यस पर्वले शैव र बौद्धको समन्वयको प्रयास गरिरहेको अनुमान हुन्छ । भगवान् पशुपतिनाथ अगाडि गर्भगृहको अन्तरालमा यस पर्वको दिनमा जल भरिन्छ । सफा सिङ्गमर्मरमाथि भरिएको जलमा भक्तहरूले पशुपतिनाथको छायाँ दर्शन गर्दछन् । यस अवसरमा बौद्धमार्गीहरूको पनि जमघट हुन्छ ।

# महेन्द्रेश्वर मन्दिर

सगुण उपासना गर्ने संस्कृतिले उपत्यकमा धेरै मठ-मन्दिरहरूको स्थापना भएको छ। घरभन्दा मन्दिरको संख्या धेरै भएको हुँदा नेपाललाई मन्दिरै मन्दिरको देश भन्ने गरिन्छ । उपत्यकबासीले प्रत्येक दिनजसो मनाउने चाडपर्वमा कुनै न कुनै देवदेवीको पूजा, उपासना गरेकै पाइन्छ । पूजा, उपासना गर्ने विधिवत् परम्परामा पनि प्रथमत: भगवान् श्री गणेशको पूजा गरिने हुँदा उपत्यकमा श्री गणेशकै सबैभन्दा धेरै मूर्ति स्थापित भएको पाइन्छ । त्यसैगरी, भगवान् सदाशिवको लिङ्ग स्थापित मन्दिरहरू पनि असङ्ख्य छन् । ललितपुरको कुम्भेश्वरदेखि पशुपतिलगायत ज्ञानेश्वर, बानेश्वर, त्रिपुरेश्वर क्षेत्रबाहेक भित्री काठमाडौं (Core area) मा नरदेवी, किलागल, भेडासिं, इन्द्रचोक, मखन, मरुहिटीमा भव्य शिवमन्दिरहरू रहेका छन् । त्यस्तै, हनुमान्ढोका दरबार क्षेत्रमा रहेको एकतीसवटा मठ-मन्दिरहरूमध्ये ९ वटा महादेवका मन्दिरहरू मात्र छन् ।

हनुमान्ढोका दरबार क्षेत्रमा रहेका ९ वटा महादेवका मन्दिरहरूमध्ये अति प्रसिद्ध महेन्द्रेश्वर मन्दिर पनि एक हो । श्री श्री तलेजु भवानीको मन्दिरका स्थापक राजा महेन्द्रमल्लले यो मन्दिर वि.सं. १६१८ फागुनमा बनाउन लगाएका हुन् । राजा यक्ष मल्लले भक्तपुरमा आफ्नो दरबारनजिकै मन्दिर बनाई पशुपतिनाथको स्थापना गरेका थिए। दिन प्रतिदिन पशुपतिनाथको दर्शन पाइयोस् भन्ने कामनाले सो मन्दिर बनाउन लगाएका थिए । राजा यक्ष मल्लले बनाएको हुनाले सो मन्दिर यक्षेश्वरको मन्दिर भनेर प्रसिद्ध भयो । रत्न मल्लले काठमाडौंमा राज्य स्थापना गरेपछि उनी र उनका सन्तानहरू काठमाडौं दरबारमा बस्न लागेका हुनाले उनीहरूलाई पनि भक्तपुरमा जस्तै आफ्नो दरबारअगाडि पशुतिनाथको मन्दिर बनाउन आवश्यक पऱ्यो । यसै अवधारणाको फलस्वरूप राजा महेन्द्र मल्लको पालामा यो मन्दिर बन्यो । यसैले, यस देवलको नाम पनि महेन्द्रेश्वर रहन गएको हो ।

श्री पशुपतिनाथको नित्य दर्शन गरी भोजनादि दैनिक कार्य सम्हाल्ने राजा महेन्द्र मल्ल एक वर्षको वर्षादमा धेरै दिनसम्म खोलानालामा बाढी आई पशुपतिनाथको दर्शन गर्न नसकी भोकै परेका राजाले श्री परमेश्वरको स्वप्नादेशानुसार दरबारनजीकै मन्दिर बनाई श्री पशुपतिनाथ स्थापना गरेको जनश्रुति पाइन्छ । मखनटोल पशुपतिनाथको नामले पनि प्रख्यात् यस मन्दिरको सम्बन्धमा भाषा वंशावलीमा यसरी लेखिएको छ–

॥ ओं श्री पशुपतिनाथ मखनटोल कान्तिपुर ॥ श्री महेन्द्रमल्लको पालामा ओं श्री पशुपतिनाथलाई नित्य दर्शन गरी धेरै परिश्रमले गरेको भक्ति देखी ओं श्री परमेश्वर खुसि भै हे राजन अब तिमि यहाँसम्म आई धाउनु पर्दैन तिमीले जाहाँ आवाहन गऱ्यो ताहाँ म आई बसि दिनेछु भन्ने आज्ञामुताविक दर्बारको उत्तर दिशामा नेपाली सम्बत् ६७४ सालमा ओं श्री पशुपतिनाथको जस्तो प्रमाण मिलाई देवालय बनाई ओं श्री पशुपतिनाथ श्री महेन्द्रेश्वर माहादेव स्थापना गरिदिएका हुन् यिनलाई ओं श्री पशुपतिनाथ पनि भन्छन् ॥

हनुमान्ढोका दरबार क्षेत्रमा तलेजु भवानीको देवलबाट अतिकता पर पश्चिमोत्तर कुनामा सडकको पारी महेन्द्रेश्वर मन्दिर रहेको छ । फराकिला दुई तहको पेटीमाथि दक्षिणाभिमुख मन्दिरको मूलद्वार सामुन्ने पहिलो पेटीमा तामाको पाताले मोडेको चौकोर मण्डलको रूपमा धर्मशिला रहेको छ । भगवान् शिवको मन्दिरको दक्षिणतिर प्राय: धर्मशिला बनाइएको हुन्छ । महास्नान अनुष्ठानको अवसरमा यसै शिलामा महाभोगका भोजनादि पकवान चढाउने कार्य हुन्छ । मन्दिरभित्र गई शिवलिङ्ग छोएर ढोग्न नमिल्ने भएकोले भक्तजनहरू धर्मशिलामा ढोगेर भगवान् शिवप्रति आफ्नो भक्ति प्रकट गर्छन् ।

मन्दिरभित्र चर्तुमुखी शिवलिङ्ग विराजमान् हुनुहुन्छ । मूलद्वारको दायाँ-बायाँ दुईवटा घण्टी झुण्ड्याइएका छन् । पहिलो पेटीको उठानमा दुई प्रस्तरका दुई सिंह छन्, दोस्रो पेटीमा पनि दायाँ-बायाँ धातु निर्मित सिंहका आकृति विद्यमान छन् । मन्दिरका सबै टुँडालहरूमा शैवसम्प्रदायसँग सम्बद्ध देवीदेवताका मूर्ति अङ्कित छन् । पेगोडा शैलीको दुई तले छानाका किनारमा 'फय गं' (हावा लाग्दा बज्ने सानासाना घण्टी) झुण्ड्याइएका छन् । दरबार क्षेत्रकै माजुदेवल आदि भगवान् शिवका अरु मन्दिरहरूमा जस्तै यसमा रतिरागका दृश्य देखाइएका छैनन् । सुवर्णनिर्मित डमरु, त्रिशूल, कलश तथा त्यसमाथि छत्र गजुरको रूपमा राखिएका छन् । पशुपतिनाथ मन्दिरको पश्चिम द्वारभित्र गर्भगृहको बाहिर रहेको भगवान् शिवको वाहन साँढेको मूर्तिजस्तै यस मन्दिरको गर्भगृहमा शिवलिङ्ग सामुन्ने आकारमा अति सानो मूर्ति छ। मन्दिर परिसरको पश्चिमोत्तर कुनामा प्रस्तरका एकजोडी कलश छन् । शक्तिको चिन्हस्वरूप ती कलश त्यहाँ राखिएका हुन् । पूर्वोत्तर कुनामा चाहिँ कामदेवको पाषाण मूर्ति विराजमान छ । भगवान् शिवको जीवनीसँग कामदेवको सम्बन्ध हुनाले प्राय: प्रत्येक शिव मन्दिरको नजिक कामदेवको मूर्ति राख्ने परम्परा रहेको छ ।

वि.सं. १९९० माघबदि ३० रोज २ का दिन आएको महाभूकम्पमा मन्दिर पाताल भई भत्की शिवलिङ्ग भाँच्चिएर उत्तरतर्फ लडिरह्यो । महाभूकम्पपछि सांस्कृतिक सम्पदा मठ-मन्दिरहरू पुनर्निर्माण, मर्मत-संभार गर्ने सिलसिलामा वि.सं. १९९५ सालमा तत्कालीन प्रधानमन्त्री जुद्ध शमशेरले तल्ला नउठाई देवल मात्र बनाइदिएका थिए । नित्य पञ्चामृत स्नान, साँझ आरती तथा पूर्णिमाको महास्नान गर्ने खर्च कौशितोष खानाले उपलब्ध गराउँदै आएको छ । महास्नानको अवसरमा मन्दिरको पूर्व-दक्षिण कुनामा रहेको श्री गणेश तथा भगवती कालीको मूर्ति अगाडि पञ्चबलि दिने गरिन्छ ।

दुई तल्ले छानाको मन्दिरको वर्तमान स्वरूप वि.सं. २०२० को जीर्णोद्धारपछि मात्र बनेको हो। प्रत्येक हप्ताको सोमबार, हरेक एकादशी तथा महाशिवरात्रिमा यस मन्दिरमा भक्तजनहरूको ठूलो घुइँचो लाग्छ। जय गुरुदेव !

# श्री शिव गोरक्ष महोत्सव

सर्वप्रथम त श्री श्री महायोगी गुरु गोरखनाथको जुन प्रतिविम्ब हामीले प्राप्त गरेका छौँ, उहाँ त्यही स्वरूपमा हुनुहुन्छ भनेर हामीले बुझेका छौँ । स्थूल सत्ताबाट यसरी बुझ्नु स्वभाविक हो । तर श्री शिव गोरक्षको महिमा, उहाँको शक्ति अपरम्पार छ, उहाँ अनन्तस्वरूप हुनुहुन्छ । उहाँ विराट्स्वरूपमा हुनुहुन्छ जसको बारेमा स्थूल देहको माध्यमबाट व्याख्या गर्न नै सकिँदैन । हामीले स्थूल जगत्बाट जे बुझ्यौँ वा जे बुझिरहेका छौँ त्यो नै हाम्रो लागि यथेष्ट प्रतीत भयो । यसको मतलब यो होइन कि हामीले जे-जति बुझ्न पायौँ, त्यति मात्रै सम्पूर्ण कुरा हो । यसबाहेक पनि अझै धेरै कुरा बुझ्न बाँकी छन् । यसलाई बुझेर साध्य छैन, स्थूलताको परिधिभित्र कैद गर्न नै सकिँदैन । सूक्ष्मतामा उहाँ अति विराट् स्वरूपमा हुनुहुन्छ । त्यसैले उहाँको बारेमा थाहा पाउन, बुझ्नका लागि हामी स्वयं पनि सूक्ष्म हुनु आवश्यक हुन्छ । हाम्रो विचारको घेरालाई हामीले धेरै फराकिलो बनाउनु जरुरी हुन्छ । हामी स्वयं विराट् स्वरूपको बन्न थालेपछि, हाम्रो विचारधारा पनि विराट् स्वरूपको बनेपछि मात्र हामीले आँकलन गर्न सक्छौँ ।

धेरै अगाडिदेखि नै श्री शिव गोरक्ष प्रकट दिवसलाई कैयौँ ऋषिमुनिहरू, साधु-सन्तहरूले पनि मान्दै आइरहेका छन् । उहाँको यो वास्तविक प्रकटस्वरूपलाई ठम्याउन सक्नेहरूले यही रूपबाट मान्दछन्, ठम्याउन नसक्नेहरूले त मान्ने प्रश्नै भएन ।

वैशाखी पूर्णिमामा गुरु गोरखनाथ गोरक्ष गुफामा प्रथमपटक प्रकट हुनुभएको भन्ने कुरालाई आधार मानेर सिद्धाश्रम शक्ति केन्द्र नेपालले यस दिनलाई 'गोरक्ष प्रकट दिवस'को रूपमा मनाउँदै आइरहेको छ । सूक्ष्म सत्ताको माध्यमबाट पाताललोकमा विराजमान रहनुभएका श्री शिव गोरक्षस्वरूपको ऊर्जा क्रमिकरूपमा माथि-माथि हुँदै आउँछ र आफ्नो प्रकट थलो जहाँ छ त्यहाँ वैशाखी पूर्णिमामा विकसित हुँदै आएर केन्द्रीकृत हुने गर्दछ । सौभागयशाली व्यक्तिहरू, भक्तहरूले त्यही बेलामा दर्शन पाउने रहेछन् । उहाँ प्रकट भएको समयमा अति पापिष्ट व्यक्ति पनि यदि उहाँको नजिक पुग्दछ भने समस्त पाप उहाँले नष्ट गरिदिनुहुन्छ र पापीको कल्याण हुन्छ ।

यसै वास्तविकतालाई बुझेर सिद्धाश्रम शक्ति केन्द्र नेपालले केवल आफ्ना गुरुलाई खुशी पार्न, गुरुको कृपादृष्टि पाउन, यो सारा संसारमा शान्ति होस्, आनन्द होस् भन्ने कामनाका साथ यस पावन पर्वलाई मनाउँदै आइरहेको छ । ऊर्जा विकासक्रमको सिद्धान्तअनुसार ऊर्जाहरू बिस्तारै ऊर्ध्वमुखी हुँदै जान्छन् । ती ऊर्जाहरू जति माथि गए पनि पृथ्वीसँग नै जोडिएर रहेका हुन्छन् । ती ऊर्जाहरू आएर बस्ने स्थान नै पृथ्वी हो । पृथ्वीको कुनै त्यस्तो तह छ जहाँ उहाँ अति विराट्स्वरूपमा व्याप्त हुनुहुन्छ । उहाँ यस्तो करुणामयी स्वरूपको हुनुहुन्छ कि त्यतिबेला पृथ्वीतटमा यज्ञादि कर्महरू, पूजा, आराधनाहरू, स्तोत्र पाठहरूजस्ता विभिन्न किसिमका पुण्य कर्महरू गर्न सक्यौँ भने हामीबाट सृजित ऊर्जाहरू स्वतः नै उहाँसम्म पुग्दछन् । वाष्पीकरण भएजस्तै ती तरंगहरू बिस्तारै माथि गएर स्वतः नै उहाँमा लीन हुन थालेपछि उहाँले त्यस ऊर्जालाई करोडौं गुणा शक्तिशाली बनाएर फेरि आशीर्वादस्वरूप पृथ्वीतटमै फर्काइदिनु हुन्छ । यसरी उहाँको आशीर्वाद प्रत्यक्षरूपमा प्राप्त गर्ने माध्यम भएको हुनाले त्यस समयमा पूजा, आराधना, साधना, भक्ति, ध्यान गर्ने परम्परा सिद्धाश्रम शक्ति केन्द्रले सञ्चालन गरेको हो ।

वैशाखी पूर्णिमाबाट हिसाब गर्दै जाँदा सूक्ष्म सत्ताका वास्तविक तरंगहरू श्रावण महिनाको आसपासमा पर्दछन् । कहिलेकाहीँ आषाढको अन्ततिरबाट शुरु हुने गर्दछन् भने कहिलेकाहीँ श्रावणको पहिलो हप्ताबाट पनि शुरु भएर मसान्ततिर टुङ्गिने रहेछन् । त्यसैलाई आधार मानेर ज्योतिषमा मुहूर्त पनि निकालिन्छ ।

यस्तो किसिमको अनुसन्धानबाट प्राप्त भएका कुरालाई समाजले विश्वास गरून् वा नगरून्, संस्थाले इमान्दारीपूर्वक तिनलाई वास्तविक मुहूर्तअनुसार कार्यान्वयन गर्ने गरेको छ । ती कार्यक्रमहरू स्वयं परमपूज्य सद्गुरुदेवबाट स्वीकृत भइसकेपछि मात्रै तय हुन्छन् । उहाँहरूको आदेश नभईकन कार्यक्रम गरेर त वास्तविक फाइदा लिनै सकिँदैन । विशेष गरी वैशाखी पूर्णिमादेखि श्रावण मसान्तसम्मको समय अमृत समय भएकोले उहाँको ब्रह्मा, विष्णु, महेश्वरस्वरूपको कृपा, आशीर्वाद प्राप्त गर्नका लागि सिद्धाश्रम शक्ति केन्द्र नेपालले श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रूपमा मान्दै आएको हो ।

स्मरण रहोस्, सिद्धाश्रम शक्ति केन्द्रले शुरुदेखि नै श्री शिव गोरक्ष महोत्सवलाई विभिन्न कार्यक्रमका बीच मनाइरहेको छ । कहिले उपत्यकाभित्रका गोरख मन्दिरहरूको सरसफाइ, कहिले मन्त्रजप तथा विशेष हवन, कहिले सवा लाख मन्त्रजप अनुष्ठान, भण्डारा, विशेष योग कक्षाको आयोजना, भजन-कीर्तन आदि कार्यक्रमहरूसँगै मनाइने श्री शिव गोरक्ष महोत्सव २०६५ साल श्रावणमा पनि विशेष कार्यक्रमका बीच सम्पन्न हुँदैछ । **जय गुरुदेव** !

# विभिन्न धर्मावलम्बीहरूको दृष्टिमा भगवान् शिव

विश्वकल्याणकारी परममंगलकारी स्वप्रकाशस्वरूप, अशरीरी, अजन्मा, अयोनिज, अव्यक्त, परमज्योतिस्वरूप, दिव्यप्रकाशस्वरूप, सच्चिदानन्दस्वरूप शिव परमात्मालाई सबै देवात्मा, धर्मात्मा, महात्मा र मनुष्यात्माहरूले कुनै न कुनै रूपमा उपासना, अर्चना, प्रार्थना, वन्दना, कीर्तन, स्मरण गरेको पाइन्छ । वायुव्यसंहितामा उल्लेख भए अनुसार तपस्वी मूरत श्री शंकरले हिमालयमा परब्रह्म परमज्योतिस्वरूप परमात्मा भगवान् शिवको अमरनाथको रूपमा अनन्य भावले ध्यान, तपस्या गरेको पाइन्छ । श्रीकृष्णका आराध्य भगवान् शिवको गोपेश्वरको रूपमा वृन्दावनमा स्थापित शिवलिङ्गको दर्शन गर्न आज पनि भक्तहरूको भीड लाग्दछ ।

पुरुषोत्तम श्रीरामले दक्षिण भारतको धनुष्कोडिमा शिवलिङ्गको स्थापना गरेर ईश्वरको पूजन गर्नु भएको थियो । श्रीरामद्वारा स्थापित एवं पूजित ईश्वरलिङ्ग द्वादश ज्योतिर्लिङ्गमध्ये एक मानिन्छ । श्रीरामद्वारा अर्चना गरिएको यो शिवलिङ्ग 'रामेश्वर', 'रामनाथ' नामबाट प्रसिद्ध छ । आज पनि लाखौं सङ्ख्यामा भक्तहरू रामेश्वरमा गएर अर्चन, पूजन गर्दछन् ।

दक्षिण भारतमा वीरशैवहरू शिवलिङ्गलाई घाटीमा, हातमा धारण गरेर प्रतिदिन द्विकाल, त्रिकाल पूजा गर्दछन् । 'ईश्वर एक नाम अनेक' यो उनीहरूको मूलतत्त्व रहेको छ । राजा विक्रमादित्यले पनि शिवज्योतिर्लिङ्गको यादगार सोमनाथको मन्दिर स्थापना गरेर पूजन गरेको पाइन्छ ।

गौतम बुद्धले गयामा बसेर तपस्या गर्दा ज्ञानोदय भएर बुद्धत्व प्राप्त गर्नु भएको थियो । बौद्ध धर्मका अनुयायी एउटा सम्प्रदायले जापानमा भगवान्को यादगार 'चिनकोनसेकी'को रूपमा शिवलिङ्गजस्तै पत्थर आफ्नो अगाडि ३/४ फिटको स्ट्याण्डमा राखी ध्यान गरेको पाइन्छ । उनीहरूको भाषामा चिनकोनसेकीको अर्थ शान्तिको दाता हो ।

सिख धर्मका गुरु नानकले पनि परमात्मालाई 'एक ओंकार सतनाम्' भनेर प्रकाशस्वरूप परब्रह्मको महिमा गाउनु भएको थियो । गुरुग्रन्थसाहिवले एक ओंकार निराकार परमात्माको नै ध्यान गर्ने विषयमा बोध गराउँछ ।

क्रिश्चियन धर्मका संस्थापक क्राइस्टले 'गड इज लाइट' भनेर भगवान्को महिमा गाएका छन् । यसको अर्थ परमात्मा प्रकाशस्वरूप नै हुनुहुन्छ । क्रिश्चियनहरू 'गड यहोवा'को नै प्रार्थना गर्दछन् ।

मुसलमानहरू 'अल्लाह हो अकबर ला इलाही इल्लल्लाहू अल्लाह हो अकबर' भनेर प्रार्थना गर्दछन् । मोहम्मद पैगम्बरले अल्लाह नूर वा परमात्मा प्रकाशस्वरूप हुनु भएको बताउनु भएको छ ।

जैन धर्मका संस्थापक महावीरले प्रकाशस्वरूप परमात्माको ध्यान गरेको पाइन्छ । जैनहरू 'अर्हन्त' भनेर परमात्माको स्मरण गर्दछन् । यसरी धर्मपिताहरू र मनुष्य एवं देवात्माहरूले परमात्मालाई सर्वोच्च सत्ताधीश रचयिताको रूपमा सृष्टिका संरक्षक मानेकाले उनैलाई सर्वात्माका पिता भनिन्छ ।

संसारका सबै धर्मावलम्बीहरू परमात्मा शिवलाई आ-आफ्नो भाषामा विविध शब्दबाट स्मरण गर्दछन्, प्रार्थना गर्दछन् र महिमा गाउँछन् । जसरी पानीलाई कसैले 'जल' भन्छन् भने कसैले वाटर, कसैले लः भन्छन् । त्यसरी नै ज्योतिर्विन्दुस्वरूप परमात्मा शिवलाई हिन्दु जगतमा ज्योतिर्लिङ्गम्, निराकार, परब्रह्म भनिन्छ । कुरानमा 'ला इलाह इल्लल्लाहू', बाइबलमा 'गड', गुरु ग्रन्थसाहिवमा 'एक ओंकार' र जैनहरू 'अर्हन्त' भनेर परमात्माको महिमा गाउँछन् ।

(स्रोत : ॐ शान्तिस्वरूप, वर्ष १, अंक २)

# वीरेश्वरस्तोत्रम्

श्रीगणेशाय नमः ॥ एकं ब्रह्मैवाद्वितीयं समस्तं सत्यं सत्यं नेह नो नास्ति किंचित् ॥ एको रुद्रो न द्वितीयोऽवतस्थे तस्मादेकं त्वां प्रपद्ये महेशम् ॥१॥ एकः कर्ता त्वं हि सर्वस्य शम्भो नानारूपेष्वेकरूपोऽप्यरूप ॥ यद्वत्प्रत्यक्पूर्ण एकोऽप्यनेकस्तस्मान्नान्यं त्वां दिनेशं प्रपद्ये ॥२॥ रज्जौ सर्पः शुक्तिकायां च रौप्यं पाथःपूरस्तन्मृगाख्ये मरीचौ ॥ यद्वत्तद्विष्वगेव प्रपञ्चो यस्मिञ्ज्ञाते तं प्रपद्ये महेशम् ॥३॥ तोये शैत्यं दाहकत्वं च वह्नौ तापो भानौ शीतभानौ प्रसादः ॥ पुष्पे गन्धो दुग्धमध्ये च सर्पिर्यत्तच्छम्भो त्वं ततस्त्वां प्रपद्ये ॥४॥ शब्दं गृह्णास्यश्रवास्त्वं हि जिघ्रेरघ्राणस्त्वं व्यंघ्रिरायासि दूरात् ॥ व्यक्षः पश्येस्त्वं रसज्ञोऽप्यजिह्वः कस्त्वां सम्यग्वेत्त्यतस्त्वां प्रपद्ये ॥५॥ नो वेदस्त्वामीश साक्षाद्विवेद नो वा विष्णुर्नो विधाताऽखिलस्य ॥ नो योगीन्द्रा नेन्द्रमुख्याश्च देवा भक्तो वेद त्वामतस्त्वां प्रपद्ये ॥६॥ नो ते गोत्रं नेश जन्मापि नाख्या नो वा रूपं नैव शीलं न देशः ॥ इत्थंभूतोऽपीश्वरस्त्वं त्रिलोक्याः सर्वान्कामान्पूरयेस्तद्भजे त्वाम् ॥७॥ त्वत्तः सर्वं त्वं हि सर्वं स्मरारे तवं गौरीशस्त्वं च नग्नोऽतिशान्तः ॥ त्वं वै शुद्धस्त्वं युवा त्वं च वालस्तत्त्वं यत्किं नास्त्यतस्त्वां नतोऽस्मि ॥८॥ स्तुत्वेति विप्रो निपपात भूमौ स दण्डवद्यावदतीव हृष्टः ॥ तावत्स बालोऽखिलवृद्धवृद्धः प्रोवाच भूदेव वरं गृणीहि ॥९॥ तत उत्थाय हृष्टात्मा मुनिर्विश्वानरः कृती ॥ प्रत्यब्रवीत्किमज्ञातं सर्वज्ञस्य तव प्रभो ॥१०॥ सर्वान्तरात्मा भगवान्सर्वः सर्वप्रदो भवान् ॥ याच्ञां प्रति नियुंक्ते मांकिमीशो दैन्यकारिणीम् ॥११॥ इति श्रुता वचस्तस्य देवो विश्वानरस्य ह ॥ शुचेः शुचिव्रतस्याथ शुचि स्मित्वाऽब्रवीच्छिशुः ॥१२॥ बाल उवाच ॥ त्वया शुचे शुचिष्मत्यां योऽभिलाषः कृतो हृदि ॥ अचिरेणैव कालेन स भविष्यत्यसंशयम् ॥१३॥ तव पुत्रत्वमेष्यामि शुचिष्मत्यां महामते ॥ ख्यातो गृहपतिर्नाम्ना शुचिः सर्वामरप्रियः ॥१४॥ अभिलाषाष्टकं पुण्यं स्तोत्रमेतन्मयेरितम् ॥ अब्दं त्रिकालपठनात्कामदं शिवसंनिधौ ॥१५॥ एतत्स्तोत्रस्य पठनं पुत्रपौत्रधनप्रदम् ॥ सर्वशान्तिकरं वापि सर्वापत्त्यरिनाशनम् ॥१६॥ स्वर्गापवर्गसम्पत्तिकारकं नात्र संशयः ॥ प्रातरुत्थाय सुस्नातो लिङ्गमभ्यर्च्य शाम्भवम् ॥१७॥ वर्षं जपन्निदं स्तोत्रमपुत्रः पुत्रवान् भवेत् ॥ वैशाखे कार्तिके माघे विशेषनियमैर्युतः ॥१८॥ यः पठेत्स्नानसमये स लभेत्सकलं फलम् ॥ कार्तिकस्य तु मासस्य प्रसादादहमव्ययः ॥१९॥ तव पुत्रत्वमेष्यामि यस्त्वन्यस्तत्पठिष्यति ॥ अभिलाषाष्टकमिदं न देयं यस्य कस्यचित् ॥२०॥ गोपनीयं प्रयत्नेन महावन्ध्याप्रसूतिकृत् ॥ स्त्रिया वा पुरुषेणापि नियमाल्लिङ्गसन्निधौ ॥२१॥ अब्दं जप्तमिदं स्तोत्रं पुत्रदं नात्र संशयः ॥ इत्युक्त्वाऽन्तर्दधे बालः सोऽपि विप्रो गृहं ययौ ॥२२॥

इति श्रीस्कन्दपुराणे काशीखण्डे श्रीवीरेश्वरस्तोत्रम् ।

# शिव पूजन

भगवान् शिव परमकल्याणकारी देव हुनुहुन्छ । उहाँ परम कारुणिक हुनुहुन्छ । कुनै पनि विधानबाट चाहे शास्त्रोक्त होस् वा वेदोक्त होस्, सामान्य या असामान्य होस् सबै विधिबाट उहाँ प्रसन्न हुनुहुन्छ । यसकारण उहाँ महादेव हुनुहुन्छ । शास्त्रमा उहाँको पूजनको जति विधि पाइन्छ त्यति अरू कुनै पनि देवताको पाइँदैन किन भने उहाँ देवाधिदेव हुनुहुन्छ, सर्वस्वरूप हुनुहुन्छ ।

**पूजन सामग्री**

शुद्ध जल, गंगा जल, केशर, चंदन, अक्षता, फूलमाला, बेलपत्र, दुबो, पञ्चांमृत, (दूध, दही, मह, घ्यू, चिनी), यज्ञोपवित, फलफूल, मिठाइ, धूप, कपूर, पान, सुपारी, ल्वाङ, अलैंची, दक्षिणा, जलपात्र तथा अन्य पूजन सामग्री ।

भगवान् शिवको पूजन शुद्ध आसनमा पूर्व वा उत्तरतर्फ फर्की बस्नुपर्छ । आफ्नो सामानलाई एउटा सानो काठको चौकी (पिर्का) माथि सेतो कपडा ओछ्याएर राख्ने र परमपूज्य सद्गुरुदेवहरू र भगवान् शिवको फोटो स्थापित गरी ती दुवै फोटोको अगाडि शिवलिगं स्थापना गर्ने । त्यसपछि धूप दीप बाल्नुहोस् ।

**आचमन**

दाहिने हातमा जल लिएर निम्न मन्त्र उच्चारण गर्ने र जल पिउनुहोस्,

**ॐ केशवाय नमः॥ ॐ माधवाय नमः॥ ॐ नारायणाय नमः॥**

यसपछि हात धुनुहोस् ।

**पवित्रीकरण**

**ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽ पि वा ।**
**यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यान्तरः शुचिः ॥**

**संकल्प**

दाहिने हातमा जल लिनुहोस् । त्यसमा अक्षता, पुष्प आदि मिलाएर

निम्न मन्त्र भन्दै संकल्प गर्नुहोस् ।

ॐ **विष्णुर्विष्णुः विंष्णुः, अद्य ...मम** (आफ्नो नाम मनमनै भन्नुहोस्) **सर्वारिष्ट निरसनपूर्वकसर्वपापक्षयार्थ श्रीसाम्बसदाशिवप्रीत्यर्थ भगवतः श्रीसाम्बसदाशिवस्य पूजनमहं करिष्ये ॥**

जल भूमिमा या अन्य कुनै पात्रमा छोडिदिनुहोस् ।

### गणेश स्मरण

**गजाननं भूतगणादिसेवितं कपित्थजम्बूफलचारुभक्षणम् ।**
**उमासुतं शोकविनाशकारकं नमामि विघ्नेश्वरपादपंकजम् ॥**

### गुरु स्मरण

**गुरुब्रह्मा गुरुर्विष्णुः गुरु र्देवो महेश्वरः ।**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

### भगवान् शिवको ध्यान

**असित गिरिसमं स्यात् कज्जलं सिन्धुपात्रे,**
**सुरतरुवरशाखा लेखिनी पत्रमुर्वी ।**
**लिखति यदि गृहीत्वा शारदा सर्वकालं;**
**तदपि तव गुणनामीश पारं न याति ॥**

ध्यान गरेर भगवान् शिवलाई बेलपत्र चढाउनुहोस् ।

### आवाहन

दाहिने हातमा अक्षता लिनुहोस् ।

**आवाहयामि देवेशमादिमध्यान्तवर्जितम्**
**आधारं सर्वलोकानामाश्रितार्थ प्रदायिनम् ॥**
**ॐ उमामहेश्वराभ्यां नमः आवाहनं समर्पयामि ।**

अक्षता अर्पण गर्नुहोस् ।

### आसन

थालीमा फूल राख्नुहोस् ।

**विश्वात्मने नमस्तुभ्यं चिदम्बरनिवासिने ।**
**रत्नसिंहासनं चारु ददामि करुणानिधे ॥**
**ॐ उमामहेश्वराभ्यां नमः आसनार्थे पुष्पं समर्पयामि ॥**

### पाद्य

**नमः शर्वाय सोमाय सर्वमंगल हेतवे ।**
**तुभ्यं संप्रददे पाद्यं श्रीकैलास निवासिने ॥**
**ॐ उमाहेश्वराभ्यां नमः पादयोः पाद्यं समर्पयामि ।**

गुरु चरणमा दुई आचमनी जल चढाउनुहोस् ।

### अर्घ्य

**अनर्घफलदात्रे च शास्त्रे वैवस्वतस्य च ।**
**तुभ्यमर्घ्य प्रदास्यामि द्वादशान्तनिवासिने ॥**
**ॐ उमामहेश्वराभ्यां नमः हस्तयोरर्घ्य समर्पयामि ॥**

हातमा जल लिएर त्यसमा गन्ध, अक्षता, पुष्प मिलाएर भगवान् शिवको हातमा अर्पण गर्नुहोस् ।

### आचमन

**अशेषजगदाधार निराधार महेश्वर ।**
**ददाम्याचमनं तुभ्यं सुन्दरेश नमोऽस्तु ते ॥**
**ॐ उमामहेश्वराभ्यां नमः आचननीयं जलं समर्पयामि ॥**

भगवान् शिवलाई तीन आचमनी जल चढाउनुहोस् ।

### स्नान

**गंगाक्लिन्नजटाभार सोमसोमार्धशेखर ॥**
**नद्या मया समानीतैः स्नानं कुरु महेश्वर ॥**
**ॐ उमाहहेश्वराभ्यां नमः स्नानीयं जलं समर्पयामि ॥**
**स्नानान्ते आचमनीयं जलं समर्पयामि ॥**
**दुग्ध स्नानं समर्पयामि नमः ॥ दधि स्नानं समर्पयामि नमः ॥**
**घृत स्नानं समर्पयामि नमः ॥ मधु स्नानं समर्पयामि नमः ॥**
**शर्करा स्नानं समर्पयामि नमः॥ पंचामृत स्नानं समर्पयामि नमः ॥**

### शुद्धोदकस्नान

**शुद्धं यत् सलिलं दिव्यं गंगाजलसमं स्मृतम् ।**
**समर्पितं मया भक्त्या शुद्धस्नानाय गृह्यताम् ।**
**श्रीसाम्बसदाशिवाय नमः । शुद्धोदकस्नानं समर्पयामि ॥**

शुद्धोदक स्नान गराउनुहोस् र शिवलिंगलाई स्वच्छ वस्त्रले पुछेर अर्को थालीमा कुंकुम वा चन्दनले स्वस्तिक बनाएर शिवलिंगको स्थापना गर्नुहोस् । त्यसपछि रातो वस्त्र चढाएर निम्न मन्त्रको उच्चारण गर्नुहोस् ।

**वस्त्रं समर्पयामि नमः॥**
**वस्त्रान्ते यज्ञोपवितं समर्पयामि नमः॥**
**आभूषणं समर्पयामि नमः॥**
**सुगंधिद्रव्यं समर्पयामि नमः॥**

### गन्ध

**नमस्सुगन्धदेहाय ह्यवन्ध्यफल दायिने ॥**
**तुभ्यं गन्धान् प्रदास्यामि चान्धकासुरभंजन ॥**
**ॐ उमामहेश्वराभ्यां नमः गन्धं समर्पयामि ॥**

चन्दन चढाउनुहोस् ।

### अक्षता

**अक्षतान् धवलान् देवसिद्धगन्धर्व पूजित ।**
**सुन्दरेश नमस्तुभ्यं गृहाण वरदो भव ।**
**ॐ उमामहेश्वराभ्यां नमः अक्षतान् समर्पयामि ॥**

अक्षता चढाउनुहोस् ।

### पुष्प

**तुरीयवनसंभूतं परमानन्दसौरभम् ।**
**पुष्पं गृहाण सोमेश पुष्पचापविभंजनं ।**
**ॐ उमामहेश्वराभ्यां नमः पुष्पाणि समर्पयामि ॥**

### बेलपत्र

**ॐ उमामहेश्वराभ्यां नमः बिल्वपत्रं समर्पयामि ॥**

यसपछि दाहिने हातमा कुंकुमले रंगाएको अक्षता लिएर निम्न मन्त्र पढ्दै शिवलिंगमा चढाउनुहोस् ।

**ॐ भवाय नमः ॥ ॐ जगत्पित्रे नमः ॥ ॐ मृडाय नमः ॥ ॐ रुद्राय नमः ॥ ॐ कालान्तकाय नमः ॥ ॐ अघोराय नमः ॥ ॐ पशुपतये नमः ॥ ॐ शर्वाय नमः ॥ ॐ विरूपाक्षाय नमः ॥ ॐ त्र्यम्बकाय नमः ॥ ॐ शूलपाणये नमः ॥ ॐ उमामहेश्वराभ्यां नमः**

**सौभाग्यद्रव्याणि समर्पयामि नमः ॥**

अबीर आदि चढाउनुहोस् ।

**धूप**

**ॐ उमामहेश्वराभ्यां नमः धूपं आघ्रापयामि ॥**

धूप बाली भगवान् शिवलाई अर्पण गर्नुहोस् ।

**दीप**

**ॐ उमामहेश्वराभ्यां नमः दीपं दर्शयामि ॥**

बलेको दियोमा अक्षता चढाएर हात धुनुहोस् ।

**नैवेद्य**

**ॐ उमामहेश्वराभ्यां नमः नैवेद्यं निवेदयामि नाना ऋतुफलानि च समर्पयामि ॥**

अब निम्न मन्त्र भन्दै पाँचपटक जल चढाउनुहोस् ।

**ॐ प्राणाय स्वाहा ॥ ॐ अपानाय स्वाहा ॥ ॐ व्यानाय स्वाहा ॥ ॐ उदानाय स्वाहा ॥ ॐ समानाय स्वाहा ॥**

**ताम्बूल**

**ॐ उमामहेश्वराभ्यां नमः मुखशुद्धचर्थं ताम्बूलं समर्पयामि ॥**

ल्वाङ्ग, अलैंची मिलाएर पान अर्पण गर्नुहोस् ।

**दक्षिणा**

**ॐ उमामहेश्वराभ्यां नमः सांगता सिद्धचर्थं हिरण्यगर्भ दक्षिणां समर्पयामि ॥**

**मंत्र**

**॥ ॐ शं शंभ्वोदभवाय शंकराय ॐ नमः ॥**

रुद्राक्ष वा स्फटिक मालाले यो मन्त्रको ११ माला जप गर्नुहोस् ।

**समर्पण**

यसपश्चात् निम्न मन्त्र पढ्दै भगवान् शिवलाई मन्त्र जप समर्पण गर्नुहोस् ।

**ॐ गुह्यातिगुह्य गोप्ता त्वं, गृहाणास्मत् कृतं जपम् ।**
**सिद्धि र्भवतु मे देव, त्वतप्रसादान् महेश्वरः ॥**

**नीराजन**

अब शुद्ध घ्यूको पाँच बत्ती बनाएर आरती गर्नुहोस् ।

**ॐ उमामहेश्वराभ्यां नमः नीराजनं समर्पयामि ॥**

**पुष्पाञ्जलि**

दुवै हातमा छोडाएको पुष्प लिएर निम्न मन्त्र भन्दै शिवलिंगमा चढाउनुहोस् ।

**हर विश्वाखिलाधार निराधार निराश्रय ॥**
**पुष्पांजलिं गृहाणेश सोमेश्वर नमोऽस्तु ते ॥**

**ॐ उमामहेश्वराभ्यां नमः मंत्र-पुष्पांजलिं समर्पयामि ॥**

**नमस्कार**

**ॐ उमामहेश्वराभ्यां नमः नमस्करोमि ॥**

भगवान् शिवलाई प्रणाम गर्नुहोस् ।

**अनेन कृत पूजाकर्मणा श्रीसंविदात्मकःसाम्बसदाशिवः प्रियन्ताम् ॐ तत्सत् ब्रह्मार्पणमस्तु ।**

यसपछि प्रसाद वितरण गरी स्वयं पनि प्रसाद ग्रहण गर्नुहोस् ।

जय गुरुदेव !

# शिवपरिवारका सदस्यहरू

## पार्वती

पौराणिक ग्रन्थमा शिव-पार्वतीको जन्म-जन्मको सम्बन्ध दर्शाइएको छ । जगदम्बा पार्वतीको आदर्श र दया-मायाका कथा पुराणहरूमा प्रशस्त भेटिन्छन् । अमरकोषमा अम्बिका पार्वतीका विभिन्न नाम बताइएको छ– उमा, कात्यायनी, गौरी, काली, हैमवती, ईश्वरी, शिवा, भवानी, रुद्राणी, शर्वाणी, अर्पणा, पार्वती, दुर्गा, मृडानी, चण्डिका, अम्बिका, आर्या, दाक्षायणी, गिरिजा (मेनकात्मक मन्नलाला अमरकोष पृ.६)

## श्री गणेश

शिव-पार्वतीका सुपुत्र भईकन पनि श्रीगणेशले सुपुत्रको रूपमा भन्दा पनि मालिकको स्थान पाउनुभएको देखिन्छ। श्रीगणेशको जन्मबारे रोचक कथाहरू प्रचलित छन् । कुनै पनि देवदेवीको पूजा, आराधना अघि श्रीगणेशको पूजा गरिन्छ ।

## गङ्गा

पुराणअनुसार गङ्गा हिमालयकी पुत्री हुन् । गङ्गाकी आमा भने सुमेरुकी छोरी मेनका हुन् । प्राचीनकालमा पृथ्वी गङ्गा थिइन् । स्वर्गबाट झर्दा भगवान् शंकरको जटामा धारण गरिएकीले भगवान् शंकरकी पत्नी पनि भनिन्छ ।

## कुमार कार्तिकेय

पुराणका अनुसार कुमारको जन्मबारे बेग्लाबेग्लै प्रसङ्गको व्याख्या गरिएको पाइन्छ । कुमारलाई शिव, गङ्गा, अग्नि, स्वाहा, कृतिका आदि विभिन्न देवताहरूको पुत्रको रूपमा उल्लेख गरिएको छ । उहाँका विभिन्न गुणहरूले गर्दा उहाँका बुबा-आमा हुन धेरै देवीदेवताहरूले इच्छा गरेको देखिन्छ ।

## नन्दी

भगवान् शिवका वाहन र गणका रूपमा नन्दीको परिचय पाइन्छ। ऋषि शिलादका छोराको रूपमा जन्मिएका नन्दीको उल्लेख शिवपुराणमा छ। नन्दीले शिवको आराधना पवित्र मनले गरेपछि अल्पायु हरेर भगवान् शिवद्वारा नै बुढेसकालले नछुने वर प्राप्त गरेको शिवपुराणमा छ। नन्दीसँग खुशी भएर भगवान् शिवले उनलाई आफ्ना गणमा सामेल गर्नुभयो ।

## भृङ्गी

शिवपरिवारका महत्त्वपूर्ण सदस्यको रूपमा भृङ्गीको उल्लेख पाइन्छ। शिवका अगाध भक्त अन्धक राक्षसले घनघोर तपस्या गरेर भृङ्गीको रूपमा जन्म लिएको वर्णन शिवपुराणमा उल्लेख छ। नेपाल महात्म्यमा पनि भृङ्गीको बारेमा वर्णन गरिएको छ । जसअनुसार गुणध्याय (भृङ्गी) को नाममा उनी जन्मेका हुन् ।  जय गुरुदेव !

## गोरख निखिल चरणमा

भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

गुरूपूजन आरती र गुरु ध्यान गरे
सद्बुद्धि र सद्ज्ञानले स्वर्ग मिल्छ अरे ॥
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ

आज भन्दै भोलि भन्दै बित्यो हाम्रो दिन
जानी-जानी गुरुदेवलाई भुली आयौँ किन ?
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

न हामीले गुरु सम्झ्यौँ, न चरण ढोग्यौँ
गुरुकृपा नपाएर दुःख-कष्ट भोग्यौँ ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

माया, मोह, लोभ, पाप छाडी बनौँ ज्ञानी
आखिरमा हाम्रो देह एक मुठी खरानी ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

गोरख निखिल गुरु हाम्रा उनकै परौँ शरण
हुन्छ हाम्रो गुरु ध्यानले सद्गतिको मरण ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

जाऔँ न मिली आश्रममा जाऔँ न मिली धाम
संसारमा प्यारो लाग्छ गोरख निखिल नाम ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

दुःख-दर्द हटाउने प्रबल इच्छा गर्दा ।
हट्ने रैछ दुःख-दर्द गुरु नाम धर्दा ॥
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

एकचोटि गुरुदेवको चरण छुन मन छ
यो जीवनले मुक्ति पाउँछ– यो मनले भन्छ ।
भज्न नभुलौँ, भज्न नभुलौ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

हाम्रो होइन यो देह, यो ऐश्वर्य, सम्पत्ति
छोडी जानुपर्छ एकदिन सबको यही हो गति ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

हजूरको शिष्य बन्न सिकाई दिनुहोस्
हामीलाई गुरुदेव साथै लिई जानुहोस् ।
भज्न नभुलौँ, भज्न नभुलौँ
गोरख निखिल गुरुको नाम भज्न नभुलौँ ।

–यादवप्रसाद श्रेष्ठ
पृथ्वीनारायण नगरपालिका ३, हरमटारी, गोरखा ।

## गुनासो छ भने लेख्नुहोस्

- के तपाईंको पत्रिकासँग सम्बन्धित कुनै गुनासो छ ?
- के तपाईंलाई पत्रिका नियमित प्राप्त भइरहेको छैन ?
- के तपाईंको सदस्यता अवधिमा त्रुटि देखिन्छ ?
- के तपाईंलाई पत्रिका सदस्य विस्तार गरेबापतको उपहार प्राप्त भएको छैन ?
- के तपाईं पत्रिका आइपुग्ने आफ्नो ठेगाना परिवर्तन गर्न चाहनुहुन्छ ?
- के तपाईंका यसका अतिरिक्त अरू पनि गुनासा तथा समस्याहरू छन् ?

आफ्नो गुनासोलाई पत्र, इमेल, फोनबाट वा भेटेर पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभागमा तुरुन्त जानकारी गराउनुहोस् । सम्भव भएसम्म समस्याको समाधान तुरुन्त हुनेछ ।

साथै, गोरक्ष निखिल वाणीका पुराना अङ्कहरू चाहिएमा सम्पर्क राख्नुहोला ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**, फोन : ०१६२२५१७७ वा

### श्रावण महिनाका चाडपर्व

| | |
|---|---|
| श्रावण १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**, दक्षिणायनारम्भ |
| श्रावण २ गते | **तान्त्रोक्त बगलामुखी हवन** |
| श्रावण ३ गते | **गुरु पूर्णिमा**, व्यास पूजा, दक्षिणामूर्ति पूजा |
| श्रावण ६ गते | **दिव्य गुरु महोत्सव, श्री शिव गोरक्ष हवन** |
| श्रावण ७ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| श्रावण १० गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| श्रावण १३ गते | कामिका एकादशीव्रत |
| श्रावण १५ गते | प्रदोषव्रत, घण्टाकर्ण चतुर्दशी (गठेमङ्गल) |
| श्रावण १७ गते | सूर्य ग्रहण |
| श्रावण १९ गते | वराह जयन्ती |
| श्रावण २२ गते | नागपञ्चमी, कल्की जयन्ती |
| श्रावण २५ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| श्रावण २८ गते | पुत्रदा एकादशीव्रत |
| श्रावण ३० गते | प्रदोषव्रत |
| श्रावण ३२ गते | ऋषि तर्पणी, रक्षा बन्धन, जनै पूर्णिमा, चन्द्र ग्रहण |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**
**श्रावण महिना भरी श्री शिव गोरक्ष महोत्सव**

मेरो उपस्थितिलाई तिमीले 'उत्सवमय' बनाउनु छ भने मेरो अनुपस्थितिलाई 'मङ्गलमय' बनाउने कला पनि सिक्नु छ ।

*– परमपूज्य सद्गुरुदेव*

## प्रभुवर ! गुरु कसलाई भनिन्छ ?

- गुरु प्रेम हो, श्रद्धा हो, पूर्ण रूपमा नमन हुने क्रिया हो ।
- गुरु प्रेमको एउटा त्यस्तो जीवन्त स्वरूप हो जसलाई अंगालोमा बाँध्न सकिन्छ, महसुस गर्न सकिन्छ, अनुभव गर्न सकिन्छ ।
- गुरु सुगन्धको त्यस्तो वेग हो जसको रस्वास्वादन समस्त शरीरमा गर्न सकिन्छ र हामी अपूर्व मादकताले उन्मत्त हुन सक्छौँ, धर्तीबाट माथि उठेर जीवनको वास्तविक स्वरूपलाई चिन्न सक्छौँ ।
- गुरु ईश्वरको प्रतिविम्ब हो जसलाई तिमी आफ्नो आँखा अगाडि साकार रुपमा देख्न सक्छौ । ईश्वरलाई तिमीले नदेखेको भएता पनि गुरुको माध्यमबाट ईश्वरलाई चिन्न सक्छौ ।
- गुरु समर्पणको त्यस्तो क्रिया हो जुन अवलोकनद्वारा सिक्न सक्छौ । जस्तैः पूर्णरूपमा उन्मुक्त हुने क्रिया, त्यसैमा विसर्जित हुने क्रिया, पूर्णरूपमा डुबेर एकाकार हुने क्रिया ।
- एकाकार हुने क्रियाले नै तिमीलाई ईश्वरसम्म पुऱ्याउन सक्छ । तिम्रो 'अहं'लाई गलाएर त्यस विराटतामा निमग्न गर्न सक्छ जसलाई तिमी 'ब्रह्म' भन्छौ, जसलाई तिमी 'धर्म' भन्छौ, जसलाई तिमी 'परब्रह्म', 'ईश्वर' र 'सर्वोच्च सत्ता' भन्छौ ।
- त्यसैकारण, गुरुलाई जीवनको लक्ष्य, जीवनको ध्येय र 'जीवनको सर्वस्व' मानिन्छ ।

## प्रभु ! गुरु र शिष्यको परस्पर के सम्बन्ध छ ?

- गुरु र शिष्य त आकाशका दुई किनारा हुन् जसको बीचमा समस्त ब्रह्माण्ड अवस्थित छ ।
- जब शिष्य गुरुसँग एकाकार हुन्छ त्यसबेला समस्त ब्रह्माण्ड शिष्यको पैतालामुनि हुन्छ र शिष्य गुरुमा सम्पूर्ण ब्रह्माण्डको झलक देखेर विस्मय, विमुग्ध हुन सक्छ ।
- गुरु र शिष्य त धर्ती र आकाशको मिलन हो जहाँ शिष्य धर्तीमा उभिएर त्यस आकाशमा ईश्वरको दर्शन गरेर आफूलाई धन्य-धन्य बनाउँछ, 'स्व'को आत्मासँग, जीवको ब्रह्मसँग र अचैतन्यको चैतन्यसँग पूर्ण मिलन हो ।
- गुरु त पूर्ण ईश्वर हो जसलाई तिमी समर्पणको झ्यालबाट चिहाएर हेर्न सक्छौ । त्यो नै प्रेमको वास्तविक स्वरूप हो जसलाई तिमी हृदयको ढोकाबाट आफूभित्र प्रवेश दिलाउन सक्छौ, बसाउन सक्छौ र आफूमै एकाकार गर्न सक्छौ ।
- गुरु त एक मस्त मादक फोहोरा हो जसमा भिजेर शिष्य आनन्दले परिपूर्ण हुन सक्छ, आफूलाई प्रेममा, मस्तीमा, मादक तरंगमा पूर्णरूपमा भिजाएर, त्यस विराटताको दर्शन गर्न सक्छ जुन उसको जीवनको आनन्द हो ।
- गुरुसँग एकाकार हुनु, गुरुको कृपाको वर्षामा भिज्नु नै विराट् सत्तालाई प्राप्त गर्नु हो, ब्रह्मानन्दमा एकाकार हुनु हो र आफूलाई सम्पूर्णतामा समाहित गर्नु हो ।

# श्री गोरख महापुराण

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।

## (अठ्चालीसौं भाग)

भाइहो ! गोगा राणापछि यिनका छोरानातिहरूले देशको भलाइका धेरै कार्य गरे तर उनका पछिका सन्तानहरूको समयमा अपार धनको स्वामी हुनाले तिनीहरूमा काम, कामिनीको यस्तो चक्कर चल्यो कि सबै राजा, महाराजा वेश्यागामी भएर नाच-रंगमा मस्त रहन लागे । कसैकहाँ सुन्दरी छोरी छ भन्ने सुन्ने बित्तिकै त्यही राजामाथि जाइलागेर त्यस सुन्दरीलाई आफ्नो घर लिएर आई विवाह गरेर रातदिन मग्न रहन लागे । अय्याशीले हद नाघ्यो । यस्तो बेला भारतवर्षमा विदेशीहरूको हमला हुन लाग्यो ।

प्यारा बन्धुहरू ! पैगम्बर मोहम्मद साहेबको मृत्युपछि उनको संगठनका नेताहरूले अरबका हिन्दुहरूलाई जितेर बलजफ्ती अरबलाई मुसलमान देश बनाए । यसपछि सन् ७११ मा इस्लामी हमला चीन सीमाना घुसेर एटलाण्टिक समुद्रसम्म फैलियो । त्यसपछि सातौं शताब्दीमा उनीहरूले भारतको उत्तरी सीमामा घुस्ने प्रयास गरे । तर भारतका वीरहरूबाट लडाइँमा परास्त भएर भाग्नु पर्‍यो । फेरि सन् ७७३ मा अरबका शाह अल हजाजका भतिजा मोहम्मद विन काशिमले अरबको फौज लिएर मुल्तान र सिन्ध प्रान्तलाई जिते । देशको मद्दत गर्नको लागि कुनै पनि हिन्दु नरेश जागेनन् र ती सुल्तानले नरेशका सुन्दरी कन्याहरूलाई आफ्नो साथ लिएर गए । ती सुन्दरी कन्याहरूको देशभक्तिको कथा सुन्दा आँखाबाट आँसु झर्न लाग्दछ । ती दुवै गिरफ्तार राजकुमारीहरूलाई आफ्ना काका शाह अल हजाजको सेवामा पठाइदिए र जब ती दुवै सुन्दरीहरू शाहको सामु प्रस्तुत गरिएपछि तिनको सौन्दर्य देखेर शाहको आँखा तिरमिरायो । ती दुवै सुन्दरीहरूसँग मोहित भएर तिनले भने– हे सुन्दरीहरू हो ! तिमीहरू के चाहन्छौ ? तब ती दुवै राजकुमारीहरूले आँसु झारेर भने– हे मुसलमान बादशाह ! तपाईंकहाँ जुन गलत व्यवहार गरिन्छ त्यस प्रकारको व्यवहार हाम्रो भारत देशमा गरिँदैन । हामीकहाँ विजयपछि सेनापतिले लुटेका हरेक वस्तु आफ्नो राजाको अगाडि पेश गर्छ । तर तपाईंका सेनापति मोहम्मद विन काशिमले हामी दुवै बहिनीसँग जबर्जस्ती विलास गरेपछि मात्र हामीलाई तपाईं कहाँ पठाएको छ । हामी दुवै बहिनीमा एकजना पनि तपाईंको रानी बन्न लायक रहेनौं । अरबपति हजाजलाई दुवै राजकुमारीहरूको कथा सुनेर आफ्नो भतिजो मुहम्मद विन काशिमको दुस्साहसमाथि बडो क्रोध आयो र उसले प्रमुख सेनापतिलाई 'अहिल्यै यहाँबाट तुरुन्त गएर जसरी हुन सक्छ मोहम्मद विन काशिमको शिर काटेर मेरो सामुन्ने हाजिर गर' भनेर हुकुम दिए ।

शाहको हुकुम सुन्नेबित्तिकै प्रमुख सेनापतिले आफ्ना सहयोगीहरूलाई आदेशको तामेलको लागि आदेश दिए । बाटामा काशिम भेट भएर कुराकानी भयो र त्यस दौरानमा तरवारले एकै पटकमा शिर काटेर आफ्नो शाहको अगाडि ल्याए राखिदिए । तब शाहले मुस्कुराएर भन्यो– हे सुन्दरी हो ! अब त खुशी होऊ । तिमीहरूको धर्म बिगार्ने दुश्मनको शिर तिम्रो अगाडि छ । अब यसमा लात्ती कसेर मेरो काखमा आओ, म तिमी दुवैलाई मेरो प्रमुख रानी बनाउने छु । यति सुनेर ती दुवै बहिनीले उठेर आफ्नो खुट्टाले मोहम्मद विन काशिमको शिरलाई लात्ती हाने र अरबपति शाहसँग भने– बिनाकारण हाम्रो राज्यलाई आक्रमण गरेर बर्वाद गरेको बदला हामीलाई मिल्यो र तँजस्तो बेवकूफ बादशाह हामीले आजसम्म देखेका थिएनौं । हाम्रो झूठो बहकाउमा आएर तैंले आफ्नो भतिजको शिर कटाइस् । यति सुन्नेबित्तिकै बादशाहले हुकुम दियो– मलाई बेवकूफ भन्ने यी दुवै बहिनीहरूलाई जिउँदै भित्तामा टाँगिदेऊ । आफ्ना बादशाहको हुकुमअनुसार ती विवश हिन्दु राजकुमारीहरूलाई भित्तामा जिउँदै टाँगिदिए । क्रमशः

जय गुरुदेव !

# गुरु र शिष्य

*यस स्तम्भअन्तर्गत हामीले सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'सूली ऊपर सेज पिया की' विषयको प्रवचनलाई 'गुरु र शिष्य' शीर्षकमा प्रकाशन गरिएको छ ।*

हामी त यतिविघ्न गएगुज्रेका छौँ कि गुरु पनि फेरिरहन्छौँ । हरिद्वारमा गएर एकदिन एकजना गुरु बनाउँछौँ, अर्को दिन ऋषिकेशमा गएर अर्को गुरु बनाउँछौँ । जो सदा वृक्ष बदल्छ, उसको जीवन भट्किरहन्छ । मनुष्यभन्दा त त्यो हाँस भलो हो जसले हरियो रुखलाई छोडेर सुकेको वृक्षमा आश्रय लिन्छ । हाँसलाई थाहा छ कि उसलाई यदि प्राप्त हुनु छ भने यहीँबाट हुन्छ । यसलाई श्रद्धा भनिन्छ । आफूलाई पूर्णरूपमा निमग्न गर्ने क्रिया हाँसलाई बढी थाहा छ । मनुष्यभन्दा त्यो समझदार छ, विवेकवान छ ।

मसँग जति पनि बनियाँहरू मिल्दछन्, जति पनि सेठ, साहु भेटिरहेका छन्, तिमीभन्दा धेरै बुद्धिमान् छन्, बढी चलाख छन्, तिमीभन्दा ज्यादा धूर्त छन् र धूर्तताबाट लाखौँ रूपैँया कमाएका छन् । तिमीमा भन्दा धेरै बेइमानी उनीहरूमा छ । उनीहरूलाई पनि मेरो सामु आँखा झुकाएर उभिनुपर्दछ किनकि म उनीहरूभन्दा तेजले कुरा गर्न सक्दछु, उनीहरूको बेइमानीलाई म चिन्दछु, उनीहरूको आवाजलाई चिन्दछु, उनीहरूको बेइमानी मेरो सामु चल्दैन, उनीहरूको धूर्तता पनि मेरो सामु चल्दैन, उनीहरूले बेइमानी गरेर अरुलाई ढाँट्न सक्लान्, मलाई होइन किनकि मलाई थाहा छ यिनीहरू कहाँबाट बोलिरहेका छन्, यिनीहरूको आवाज कहाँबाट आइरहेको छ । मैले तुरुन्तै त्यहाँ त्यस घाउलाई टच गर्दछु... । मेरा सामु यी चलाखीहरू नगर । मैले जीवनमा घाँस काटेको छैन । मैले सधैँ मनुष्यको फसल उत्पन्न गर्दछु र सधैँ काट्दछु ।

म जान्दछु कि यो बेकारको दाना उत्पन्न भएको छ, यो असली दाना उत्पन्न भएको छ । यस बालीमा पच्चीस दाना छन् । यो सुकेको बाली हो । म जान्दछु किनकि जीवन मैले त्यसैमा व्यतीत गरेको छु । यसैले यदि तिमी आँखा उठाउँछौ भने मलाई थाहा हुनेछ कि तिम्रो आँखामा के छ ।

तिमी मेरो सामु जति नै गिडगिडाउ, हात जोड, म बुझिहाल्दछु कि तिमी कहाँ छौ । पूरा ब्यारोमिटर मसँग छ, र जुन समय

**हामी त यतिविघ्न गएगुज्रेका छौँ कि गुरु पनि फेरिरहन्छौँ । हरिद्वारमा गएर एकदिन एकजना गुरु बनाउँछौँ, अर्को दिन ऋषिकेशमा गएर अर्को गुरु बनाउँछौँ । जो सदा वृक्ष बदल्छ, उसको जीवन भट्किरहन्छ । मनुष्यभन्दा त त्यो हाँस भलो हो जसले हरियो रुखलाई छोडेर सुकेको वृक्षमा आश्रय लिन्छ । हाँसलाई थाहा छ कि उसलाई यदि प्राप्त हुनु छ भने यहीँबाट हुन्छ । यसलाई श्रद्धा भनिन्छ । आफूलाई पूर्णरूपमा निमग्न गर्ने क्रिया हाँसलाई बढी थाहा छ । मनुष्यभन्दा त्यो समझदार छ, विवेकवान छ ।**

मलाई महसुस हुन्छ कि अब यसमा समर्पण आएको छ, तिमीलाई सुन बनाउन मलाई धेरै समय लाग्ने छैन– यसमा मात्र एक सेकेण्ड लाग्नेछ । तिम्रो बीस वर्षको परिश्रम तिम्रो परिश्रम हो । हुनसक्छ तिमी पाँच मिनेटमा फलामबाट सुन बन वा यसमा तिमीलाई पाँच वर्ष लाग्न पनि सक्ला ।

मैले तिमीहरूलाई बताइसकेको छु कि तिमीहरूसँग यही तीनवटा बाटाहरू मात्र छन् जसबाट तिमीहरू फलामबाट सुन बन्न सक्छौ । मैले तिम्रो हातमा पारसको ढुंगा थमाइदिएको छु जसलाई तिमी श्रद्धा, समर्पण, सेवा भन्छौ । गुरुलाई थाहा छ तिमीलाई कुन काम सुम्पिएको छ । तिमीले यस कुरालाई बुझ्नु आवश्यक छैन गुरुले तिमीलाई किन काम सुम्पिनुभएको छ ।

तिमीलाई थाहा हुनुपर्दछ– गुरु ग्रन्थ साहबमा लेखिएको छ कि यदि कोही गल्ती गर्दछ भने उसले मानिसहरूको जुत्ता सफा गर्ने कामको जिम्मा पूरा गर्नुपर्ने हुन्छ । 'बरनाला' पंजाबका मुख्यमन्त्री थिए । जब उनलाई पंथबाट निकालियो र फेरि पंथमा बोलाइयो तब उनलाई सजाय सुनाइयो– गुरुद्वारेमा बसेर चौबीस घण्टा जुत्ता सफा गर्ने ।

तिमीलाई कुन काम सुम्पने हो त्यो गुरुलाई बढी जानकारी छ । त्यसैले पादपद्म बन्ने काम तिमीमा निर्भर गर्दछ । तिमी विवेकानन्द बन्न सक्छौ, यो तिम्रै हातमा छ, गुरु त एक ठाउँमा उभिनुभएको छ ।

अब म त्यो गल्ती गर्दिन जुन बुद्धले गरेका थिए, महावीरले गरेका थिए, जुन शंकराचार्यले गरेका थिए । उनीहरूका जीवनका केही न्यूनताहरू थिए जसको बारेमा बताउन मलाई कुनै संकोच छैन भलै मेरो सामु उनीहरूका सयौँ अनुयायी होऊन् । यदि ममा तागत छ, ममा क्षमता छ, मेरो कुरामा सत्यता छ भने इतिहास आफैले यस कुराको जवाफ दिनेछ ।

इतिहासले आफै यस कुरालाई भन्नेछ कि यसले जे भनिरहेको छ त्यो सही भनिरहेको छ । यदि शंकराचार्यको जीवनमा न्यूनताहरू छन् भने त्यसलाई बताउनु आवश्यक छ । यदि शंकराचार्यका जीवनका केही विशिष्टताहरू छन् भने तिनलाई पनि बताउनु पर्दछ । यसैले सारा परम्परा गलत हुन गयो किनकि समुद्र आफै गंगोत्रीमा गएर उभियो, यहाँ गल्ती भयो, समुद्रले आफ्नो मर्यादा छोड्न हुँदैनथ्यो ।

शंकरले धेरै पहिले नै पादपद्मलाई त्यो ज्ञान दिए जबकि उसको अहंलाई तोड्न बाँकी नै थियो । जब अहं बाँकी रह्यो उसको मनमा यो कुरा आयो कि अब मैले शंकराचार्य बन्नु छ । म शंकराचार्य तब बन्न सक्छु जब यसको हत्या गर्दछु । यत्रो जघन्य अपराध यसकारण भयो किनकि उसको अहं गलेको थिएन, उसको रगतमा विकार थियो । यो शंकराचार्यको न्यूनता थियो, यो शंकराचार्यको गल्ती थियो र त्यस गल्तीको परिणाम शंकराचार्यले भोग्नुपऱ्यो । क्रमश:

जय गुरुदेव !

# लघु रुद्राक्ष माला

**अकिञ्चन सन् प्रभवः स सम्पदां ।**

**त्रिलोकनाथः पितृसद्मगोचरः ।**

**स भीमरूप शिव इत्युदीर्यते**

**न सन्ति याथार्थ्य विदः पिनाकिनः ॥**

भगवान् शिव परम दरिद्र भएर पनि समस्त सम्पत्तिहरूको उद्‌गम हुनुहुन्छ, सम्पूर्ण प्रकारका सम्पत्तिहरू उहाँबाट नै प्रकट हुन्छन्, उहाँ श्मशानवासी भए तापनि तीनै लोकको नाथ हुनुहुन्छ, भयानक रूपमा रहनुहुने भए तापनि उहाँको नाम 'शिव' रहेको छ, उहाँ वास्तवमा के हुनुहुन्छ भन्ने तत्त्वलाई कसैले जान्न सकेको छैन, उहाँलाई चिन्न, जान्न सक्नु केवल उहाँकै कृपाबाट मात्र सम्भव छ ।

यस्ता रहस्यमयी, परम सामर्थ्यवान् भगवान् शिव जो आफ्ना भक्तजनमाथि कृपा वर्षाउन अन्य देवदेवीहरूभन्दा अग्रगण्य स्थानमा हुनुहुन्छ, उहाँलाई सजिलै खुशी बनाउन सकिने श्री शिव गोरक्ष महोत्सव हाम्रो नजिक आइरहेको छ । उनै भगवान् सदाशिवका १०८ अवतार शृङ्खलाहरूमा प्रमुखरूपमा श्री शिव गोरक्ष गुरुदेव र शिवस्वरूपमा विराजमान परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ जो आफ्ना भक्तजनलाई यसपटकको श्री शिव गोरक्ष महोत्सवको पावन अवसरमा असीम अनुकम्पा, कृपा, आशीर्वाद वर्षाउन लालयित हुनुहुन्छ । त्यसैले परमपूज्य सद्‌गुरुदेवहरूले आफ्ना असङ्ख्य भक्तजनको चाँडोभन्दा चाँडो उन्नति प्रगति होस्, उनीहरूका समस्त रोग, बाधा, पीडा, अड्चनहरू समाप्त होऊन् र उनीहरूभित्र त्यो दिव्यता, चैतन्यता, क्षमता पलाएर आओस् जसको फलस्वरूप उनीहरू आफ्ना परम आराध्य सद्‌गुरुदेवहरूको अझ नजिक आइपुग्न सकून् भन्ने हेतुले एक विशिष्ट प्रकारको दुर्लभ सामग्री हामीलाई अत्यन्त सीमित मात्रामा भए पनि विशेष कल्याणवश उपलब्ध गराइदिनुभएको छ । उक्त देवदुर्लभ सामग्री हो- 'लघु रुद्राक्ष माला' ।

सर्वप्रथम रुद्राक्ष शब्दको महिमा बुझौँ । रुद्राक्ष अर्थात् भगवान् रुद्र (शिव) को अक्ष (आँखा) बाट उत्पन्न भएको परम कल्याणकारी वस्तु हो । रुद्राक्ष स्वयंमा यति क्षमता सम्पन्न छ कि यसले हामीमा स्वतः आन्तरिक र बाह्य परिवर्तन ल्याइदिन सक्छ । शरीरगत हिसाबबाट हेर्दा यसले अङ्ग प्रत्यङ्गहरूलाई बलियो बनाउँछ, रक्तविकार नष्ट गरी धातुलाई पुष्ट पार्दछ, शरीरभित्र र बाहिरका हानिकारक कीटाणुहरूलाई नष्ट गर्दछ । रुद्राक्षले विभिन्न स्वास्थ्यसम्बन्धी कमजोरीहरू जो कफ, पित्त, वायु दोषबाट उत्पन्न हुन्छन्, तिनीहरूलाई नष्ट गर्न मद्दत गर्दछ । रुद्राक्ष एक प्रकारबाट हेर्ने हो भने महाऔषधि नै हो । पेटरोग, हृदयरोग, पक्षाघातजस्ता जटिल समस्याहरूसमेत रुद्राक्षको उचित प्रयोग विधिबाट मेटिन सक्छन् भने आन्तरिकरूपबाट यसले हामीलाई सीधै आशुतोष भगवान् सदाशिवसँगको आन्तरिक सम्बन्ध गाँस्नलाई प्रमुख भूमिका निभाउँदछ । एउटा साधारण रुद्राक्ष मात्रले त यति विघ्न लाभहरू हामीलाई दिन सक्दछ भने स्वयं परमपूज्य सद्‌गुरुदेवहरूले विशिष्ट शुभ मुहूर्त पारेर प्रदान गर्नुभएको 'लघु रुद्राक्ष माला' जसमा एक सयभन्दा बढी दिव्य शक्तियुक्त, पूर्णरूपमा स्वयं सद्‌गुरुदेवहरूबाट शिवत्व शक्ति स्थापित गरी जीवन्त पार्नुभएका साना-साना रुद्राक्षका दानाहरूलाई समेटेर निर्माण भएको मालाले हामीलाई जीवनको कुन-कुन क्षेत्रमा र कसरी असङ्ख्य लाभहरू पुऱ्याउँछ भन्ने कुरा सोच्न र बुझ्न सक्नु हाम्रो वशको कुरा होइन । एउटा कुरा यहाँनिर हामीले के बुझ्नु जरुरी हुन्छ भने रुद्राक्ष जति सानो हुन्छ, त्यो आध्यात्मिक दृष्टिबाट त्यति नै शक्तिशाली (Powerful) हुन्छ । त्यसको ग्रहण गर्ने क्षमता (Recieving Capacity) व्यापक (Maximum) हुन्छ । स-साना रुद्राक्षका दानाहरू उक्त मालामा यसकारण राखिएको छ कि यसले ब्रह्माण्डबाट आफूमा व्यापक मात्रामा शिवत्व ऊर्जा हरपल समाहित गरिरहन सकोस् र धारण गर्ने व्यक्तिलाई भगवान् सदाशिवको निकटता सहजै, सजिलैसँग प्राप्त हुन सकोस् । जसरी मन शरीरभन्दा सानो र सूक्ष्म छ, यो शरीरभन्दा कैयौं गुणा शक्तिशाली छ, क्षणभरमै कैयौं माइल परको स्थानमा पुगी फर्कन सक्छ, अनेकौं विचार तरङ्गहरूलाई आफूमा समेट्न सक्छ, त्यसैगरी हेर्दा साना देखिने रुद्राक्षका दानाहरू जुन 'लघु रुद्राक्ष माला'मा राखिएका छन्, ती सम्पूर्ण दानाहरू शिव ऊर्जाले भरिएका छन्, यिनीहरूले हामीभित्र रहेको सूक्ष्मभन्दा सूक्ष्म शक्तिलाई जगाई शिवस्वरूप सद्‌गुरुदेवहरूको

सम्पर्कमा हामीलाई पुऱ्याउन पूर्ण सहायता गर्दछन्। अन्य मालामा भन्दा यस रुद्राक्ष मालामा व्यापक शिवत्व शक्ति रहेको हुन्छ। यसले जप पनि गर्न सकिने हुनाले मन्त्र जपको ऊर्जालाई यसले धेरै गुणा बढी शक्तिशाली बनाइदिन्छ, फलस्वरूप हामीभित्र थोरै मेहनतले पनि ज्यादै प्रचुर मात्रामा शिवत्व शक्ति प्राप्ति हुन्छ।

यो माला हामीले चाहेको समयमा सधैं सजिलै पाउन सकिने वस्तु होइन, यो अति विशिष्ट विधि-विधानका साथ प्राण-प्रतिष्ठा भएर केही सीमित सङ्ख्यामा र अहिलेको यस श्री शिव गोरक्ष महोत्सवको दिव्य अवसर पारेर परमपूज्य सद्‌गुरुदेवहरूले आफ्ना भक्तजनमाथि कृपा, आशीर्वाद वर्षाउनको लागि पठाइदिनुभएको छ। समय र मौकाले कसैलाई पर्खँदैन। एकपटक यो दिव्य सामग्री समाप्त भइसकेपछि फेरि प्राप्त गर्न सम्भव नहुन पनि सक्छ किनकि यस प्रकारको पृथ्वीतटमै दुर्लभ माला जो स्वयंमा गोरख निखिल ऊर्जामय छ, त्यसलाई प्राण-प्रतिष्ठा गर्ने योग जुरेको निश्चित समय ब्रह्माण्डमा बारम्बार आइरहँदैन। मन्दिरमा बस्ने कुनै पण्डित, पुरोहित वा सामान्य व्यक्तिले दुई-चार शब्दको मन्त्र भट्याएर अबीर, अक्षता, जल छर्किँदैमा माला प्राण-प्रतिष्ठित हुने होइन, यो भ्रममा तपाईं नपर्नुहोस्। प्राण-प्रतिष्ठा गर्ने भनेको निर्जीव वस्तुमा प्राण शक्ति राखी त्यसलाई जीवित, जागृत बनाउने प्रक्रिया हो। के निर्जीव वस्तुमा प्राण भरेर त्यसलाई जीवित बनाउनेजस्तो कार्य मन्दिरमा बस्ने पण्डित, पुरोहित वा कुनै सामान्य व्यक्तिले गर्न सक्छ ? एउटा सामान्य मस्तिष्क भएको व्यक्तिले पनि यति कुरा त बुझ्नुपर्ने हो। निर्जीव वस्तुमा प्राण फुकेर त्यसलाई जीवित बनाउने त साक्षात् भगवान् शिव हुनुपऱ्यो। यस्तो असम्भव प्रतीत हुने अति जटिल कार्य यदि कसैको वशमा छ भने त्यो केवल परमपूज्य सद्‌गुरुदेवहरूमा छ, त्यसैले यस विषयवस्तुलाई लिएर बेला बखतमा आइरहने तर्क वितर्कहरूप्रति सावधान रहँदै बेला, समय र सामग्री 'लघु रुद्राक्ष माला' बाँकी रहँदै प्राप्त गर्ने सौभाग्य तपाईंले पनि हात पारिहाल्नुहोस्। यही नै हाम्रो सल्लाह, सुझाव छ समस्त भक्तजनलाई। **जय गुरुदेव !**

# जानकारी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक **गोरक्ष निखिल वाणी**को सदस्यता ग्रहण गरेर पत्रिकालाई जनजनमा पुऱ्याउन महान अभियानमा सहभागी हुनुभएका पत्रिकाका समस्त ग्राहक महानुभावहरूलाई हार्दिक धन्यवाद दिँदै यसै महान् कार्यको निरन्तरतालाई दिगो राख्दै यहाँहरूको पत्रिका सदस्यता नवीकरण गर्नुपर्ने भएमा वा नयाँ सदस्य ग्रहण गर्नु परेमा पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, संस्थाका सम्पर्क कार्यालय वा आरती सञ्चालन केन्द्र र प्रचार प्रसार केन्द्र रहेका स्थानमा अथवा पत्रिका घर-घरमा वितरण गर्न आउँदा सम्बन्धित वितरकसँग सम्पर्क राख्न हुन अनुरोध छ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**

# हार्दिक आमन्त्रण

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्र तनहुँ सम्पर्क कार्यालयको आयोजनामा यही २०६५ श्रावण महिनाको २ गतेदेखि **तान्त्रोक्त वेदव्यास हवन कार्यक्रम** संचालन हुन गइरहेको हुनाले प्रत्येक महिनाको पहिलो बिहीबार उक्त कार्यक्रममा आफ्ना स्वजन, मित्रजनसहित सहभागी भई परमपूज्य सद्‌गुरुदेवहरू र भगवान् वेदव्यासको कृपा, आशीर्वाद प्राप्त गर्नु हुन सम्पूर्ण साधक-साधिका एवं भक्तजनहरूलाई हार्दिक आमन्त्रण गर्दछौं।

स्थान : वेदव्यास गुफा, दमौली, तनहुँ।
समय : बिहान ८:००-९:०० बजेसम्म।
सम्पर्क फोन : ०६५-५६१६६२

# ग्रहण र यसको प्रभाव

ग्रहणको विशेष समय साधकको लागि महत्त्वपूर्ण हुन्छ किनकि ती क्षणहरूमा साधना सम्पन्न गर्दा साधकको अन्त:स्थिति विशेष तरंगद्वारा सम्बन्धित ग्रहसँग जोडिन्छ। जो व्यक्तिको यस तरंगसँग सामञ्जस्य हुन्छ, उसको जीवन सफल हुन्छ ।

प्रत्येक व्यक्तिले पूजा, पाठ, मंत्र जप, अनुष्ठान आदि सम्पन्न गरी यस समयको सदुपयोग गर्नुपर्दछ । कुनै पनि प्रकारको समस्याबाट मुक्ति पाउनको लागि यसभन्दा राम्रो समय अरू छैन । यस विशिष्ट समयमा गरेको पूजा विधान, मंत्र जप आदिले साधकलाई सय गुना फल प्राप्त हुन्छ । ग्रहणकालमा गरेको एक माला मंत्र जप पनि अन्य समयमा गरेको सय माला मंत्र जपको बराबर हुन्छ ।

ठूलाठूला तान्त्रिक र मान्त्रिक पनि यस्तै क्षणको प्रतीक्षामा बसेका हुन्छन् । साधारण मानिसलाई यस तथ्यको ज्ञान नभएको कारण यस्ता विशेष क्षणहरूलाई त्यत्तिकै गुमाइरहेका हुन्छन् ।

खगोलशास्त्रीहरूका अनुसार केवल सूर्यको प्रकाशले नै आकाशमण्डलका सारा ग्रह प्रभावयुक्त हुन्छन् । पृथ्वी र चन्द्रमालाई पनि सूर्यबाट नै प्रकाश प्राप्त हुन्छ । पूर्णिमाको दिन चन्द्रमा पृथ्वीबाट वृत्ताकार देखिन्छ । चन्द्रमा आफ्नो कक्षमा घुम्दै पृथ्वीको परिक्रमा गरिरहेको हुन्छ । कुनै पूर्णिमाको दिन चन्द्रमा र सूर्यको बीचमा पृथ्वीको केही भूभाग आउँदछ । त्यस कालखण्डमा सूर्यको किरण चन्द्रमासम्म पुग्न पाउँदैन र त्यति नै भाग काटिएको देखिन्छ । यसैलाई चन्द्रग्रहण भनिन्छ । खगोलशास्त्रीहरूले पनि वराहमिहिर कालबाट यस कुराको विचार गरेका छन् कि अन्तरिक्षको यस घटनाले मनुष्य जीवनमा समेत प्रभाव पार्दछ ।

साधनाको क्षेत्रमा ग्रहणको विशेष महत्त्व छ । त्यसो त ग्रहणको समयमा कतिपय कार्यहरू गर्न मनाही पनि गरिएको छ । यस समयमा भोजन र जल पनि ग्रहण गर्नु हुँदैन किनकि त्यस समयमा पृथ्वीमा जुन प्रकाश व्याप्त हुन्छ, त्यो प्राय: बेफाइदाजनक हुन्छ । तर यो कुरा पनि सत्य हो कि विष पनि कतिपटक अमृतसरह फाइदाजनक हुन्छ र त्यसले ज्यान लिनुको सट्टा जीवनदान पनि दिने गर्दछ ।

यसप्रकार ग्रहणका केही खराब प्रभाव भए तापनि त्यसमा एउटा गुण अवश्य नै हुन्छ । त्यही गुणको कारणले ग्रहणको समय साधनाको लागि अत्यधिक उपयोगी समय बन्न पुगेको हो । ग्रहणको समयमा गरेको मन्त्र जप साधारण समयमा गरेको मंत्र जपभन्दा कैयौं गुणा अधिक प्रभावशाली हुन्छ जसबाट सफलता निश्चित हुन्छ । ग्रहणको समयमा नै तपस्यांशलाई, दीक्षा वा साधनात्मक प्रवाहलाई पूर्ण रूपबाट ग्रहण गर्न सकिन्छ ।

जीवनमा सबै कुरा दोस्रोपटक पनि पाउन सकिन्छ, तर जुन बितिसकेको समय छ, त्यसलाई फेरि पाउन सकिन्न । नक्षत्रको जुन संयोग, ग्रहणको जुन प्रभाव यस समयमा बनिरहेको छ, त्यो एकपटक बितिसकेपछि फेरि आउन सक्दैन । ग्रहण त आउँछ तर जुन नक्षत्र यसपटक छ, त्यो फेरि नहुन सक्छ । कसलाई के थाहा, भोलि कुन परिस्थिति हुन्छ र साधना गर्न सकिन्छ कि सकिँदैन ? यसकारण श्रेष्ठ साधक उही हो जसले समयको महत्त्वलाई जानेर कार्य गर्न ढिलो गर्दैन ।

भगवान् रामले आफ्ना गुरुबाट ग्रहणकै समयमा दीक्षा प्राप्त गर्नुभएको थियो । यसै प्रकारले भगवान् कृष्णले पनि जब सान्दीपन ऋषिबाट दीक्षा पाउनुभएको थियो, त्यस समयमा ग्रहण लागिरहेको थियो । महाभारतको युद्ध शुरु हुन गइरहेको थियो । उता कौरवका सेना सुसज्जित भइसकेका थिए । भीष्म, द्रोणाचार्य, कौरवहरू सबै आ-आफ्नो रथमा चढिसकेका थिए । यता पाण्डवहरूका पनि सेना तयार थिए । यत्तिकैमा पाण्डवहरूले भगवान् श्रीकृष्णसँग युद्ध आरम्भ गर्नको लागि अनुमति मागे तर श्रीकृष्णले उनीहरूलाई रोकिदिनुभयो । उहाँले भन्नुभयो, "यदि अहिले नै युद्धको आरम्भ भयो भने विजय कसको हुन्छ भन्ने निश्चित छैन । तर अब केही क्षणमा नै ग्रहण लाग्न आँटेको छ, यदि त्यसबेला युद्धको शंखनाद गरियो भने विजय निश्चय नै तिमीहरूको हुनेछ ।" भगवान् श्रीकृष्णले ग्रहणको त्यस सिद्ध क्षणलाई बुझ्नुभएको थियो । जब श्रीकृष्णद्वारा निर्देशित समयमा पाण्डवहरूले युद्ध प्रारम्भ गरे तब जीत उनीहरूको नै भयो ।

ग्रहणको महत्त्व त्रेतायुग, द्वापरयुगमा थियो भने अहिलेको समयमा पनि अवश्य छ किनकि ग्रह त उही नै हुन् । ज्ञानी, विद्वान्, उच्चकोटिका योगी, संन्यासी आदिले यस्ता क्षणहरूलाई कहिल्यै चुकाउँदैनन् । त्यसकारण आत्मीय पाठकवर्गले पनि यही श्रावण महिनामा पर्ने सूर्यग्रहण चन्द्रग्रहणको समयलाई सहीरूपमा सदुपयोग गर्नुहुनेछ भन्ने आशा एवं विश्वास लिएका छौं ।

जय गुरुदेव !

अनन्तं वासुकिं शेष पद्मनाभं च कम्बलम् ।
शंखपालं धार्तराष्ट्रं तक्षकं कालियं तथा ॥
एतानि नव नामानि नागानां च महात्मनाम् ।
सायंकाले पठेन्नित्यं प्रातःकाले विशेषतः ॥
तस्मै विषभयं नास्ति सर्वत्र विजयी भवेत् ॥

# नागपञ्चमी

श्रावण महिनाको शुक्ल पक्षको पञ्चमी तिथिलाई नागपञ्चमीको रूपमा मनाइन्छ । यस पर्वमा व्रत गरेर नागको पूजा-अर्चना गरिन्छ । वेद र पुराणहरूमा महर्षि कश्यप र उहाँकी धर्मपत्नी कद्रूबाट नागको उद्गम भएको मानिन्छ । नागको मूलस्थान पाताल लोक प्रसिद्ध छ । पुराणमा नै नागलोकको राजधानीको रूपमा भोगवतीपुरी विख्यात छ । संस्कृत कथा-साहित्यमा विशेषरूपमा 'कथासरित्सागर' नागलोक र त्यहाँका बासिन्दाको कथाहरूले ओतप्रोत छ । गरुडपुराण, भविष्यपुराण, चरकसंहिता, सुश्रुतसंहिता, भावप्रकाश आदि ग्रन्थहरूमा नागसम्बन्धी प्रसंग उल्लेख भएको पाइन्छ। पुराणहरूमा यक्ष, किन्नर र गन्धर्वहरूको वर्णनका साथै नागको पनि वर्णन भएको पाइन्छ। भगवान् श्रीविष्णुको शय्याको शोभा नागराज शेषले बढाइदिन्छ। भगवान् शिव र श्री गणेशको अलङ्कारमा पनि नागको महत्त्वपूर्ण भूमिका रहेको छ। पुराणमा भगवान् सूर्यको रथमा द्वादश नागको उल्लेख पाइन्छ जुन क्रमशः प्रत्येक महिनामा उनको रथको वाहक बन्दछ। यसप्रकार अन्य देवताहरूले पनि नाग धारण गर्नुभएको छ । नागलाई पूर्वीय संस्कृतिमा देवताको रूपमा स्वीकार गरिएको छ ।

कश्मिरका प्रसिद्ध संस्कृत कवि कल्हणले आफ्नो प्रसिद्ध पुस्तक 'राजतरंगिणी'मा कश्मिरको सम्पूर्ण भूमिलाई नाग (अवदान) मान्नु भएको छ। त्यहाँको प्रसिद्ध नगर 'अनन्तनाग'को नामाकरण यसको ऐतिहासिक प्रमाण हो । देशको पर्वतीय प्रदेशमा धेरै नाग-पूजा हुन्छ । यहाँ नागदेवता अत्यन्त पूज्य मानिन्छ। हाम्रो देशको प्रत्येक गाउँ, नगरमा गाउँदेवता र लोकदेवताको रूपमा नागदेवताको पूजास्थल पाइन्छ । पूर्वीय संस्कृतिमा सायं, प्रातः भगवत्स्मरणका साथ अनन्त तथा वासुकि आदि पवित्र नागको नामस्मरण पनि गरिन्छ जसबाट नागको विष र भयबाट रक्षा हुने विश्वासका साथै सर्वत्र विजय पनि हुने विश्वास छ ।

देवी भागवत्मा प्रमुख नागको नित्य स्मरण गरिएको छ। हाम्रा ऋषिमुनिहरूले नाग उपासनामा अनेक व्रत, पूजनका विधान गर्नुभएको छ। श्रावण महिनाको शुक्लपक्षको पञ्चमी नागका लागि अत्यन्त आनन्द दिने हुन्छ- 'नागानामानन्दकरी' पञ्चमी तिथिको नागपूजामा नागलाई गाईको दुधले नुहाउनु पर्ने विधान छ। भनिन्छ, एकपटक मातृश्रापले नागलोक जल्न लाग्यो । यस दाहपीडाको निवृत्तिको लागि नागपञ्चमीमा गाईको दुधस्नानले नागलाई शीतलता प्रदान गर्दछ। यसबाट भक्तलाई पनि सर्पको डरबाट मुक्ति मिल्दछ। श्रावणमा नागपञ्चमीको कथाको ठूलो महत्त्व रहेको छ। यस कथाको प्रवक्ता सुमन्तमुनि हुनुहुन्थ्यो तथा स्रोता पाण्डव वंशका राजा शतानिक हुनुहुन्थ्यो। उक्त प्रसिद्ध कथा यसप्रकार छ– एकपटक देवता र असुरले समुद्र मन्थनद्वारा चौध रत्नमा उच्चैःश्रवा नामक अश्वरत्न प्राप्त गर्नुभएको थियो। यो अश्व अत्यन्त श्वेत वर्णको थियो । त्यसलाई देखेपछि नागमाता कद्रु तथा विमाता विनता दुवैमा अश्वको रंगको सम्बन्धमा वादविवाद भयो। कद्रुले भनिन्– अश्वको केश कालो वर्ण छ। यदि म आफ्नो कथनमा असत्य सिद्ध भएमा म तिम्रो दासी बन्छु र सत्य ठहरिएमा तिमी मेरी दासी बन्नुपर्छ। कन्द्रुले नागलाई कपालजस्तै सूक्ष्म बनेर अश्वको शरीरमा आवेष्ठित हुन निर्देशन दिए। तर नागले आफ्नो असमर्थता प्रकट गरे। यसबाट क्रुद्ध भई उनले नागलाई श्राप दिए– पाण्डव वंशका राजा जनमेजय नागयज्ञ गर्नेछ। त्यही नागयज्ञमा तिमीहरू सबै जलेर भष्म भई जाओस् । नागमाताको श्रापबाट भयभीत नागहरू वासुकिको नेतृत्वमा ब्रह्माजीसामु गएर श्राप निवृत्तिको उपाय सोध्दा ब्रह्माजीले निर्देशन दिनुभयो– यायावर वंशमा उत्पन्न तपस्वी जरत्कारु तिमीहरूको बहिनी हो। उनको छोरा आस्तीकले तिमीहरूको रक्षा गर्नेछ। भगवान् ब्रह्मले पञ्चतिथिमा यो वरदान दिनुभयो तथा यसै तिथिमा आस्तीकमुनिले नागको परीक्षण गर्नुभएको थियो । अतः नागपञ्चमीको यो व्रत ऐतिहासिक तथा साँस्कृतिक रूपबाट महत्त्वपूर्ण छ।

धर्मग्रन्थहरूमा श्रावण मासको शुक्लपक्षको पञ्चमीका दिनलाई नागपञ्चमीको रूपमा मनाइन्छ । व्रतको साथ एकपटक भोजन गर्ने नियम छ। पूजामा पृथ्वीमा नागको चित्र चित्राङ्कन गरिन्छ। सुन, चाँदी (रजत) र काठबाट नाग बनाएर फुल, धूप, दीप, गन्ध एवं विभिध नैवेद्यहरूले नागको पूजन गरिन्छ। नागको अनेक जाति र प्रजातिहरू छन्। भविष्यपुराणमा नागको लक्षण, नाम, स्वरूप र जातिको विस्तार बारे वर्णन गरिएको पाइन्छ। मणिधारी तथा इच्छा धारी नागको पनि उल्लेख गरिएको पाइन्छ। नेपाल धर्मप्राण देश हो। नेपाली चिन्तन प्राणी मात्रमा आत्मा र परमात्माको दर्शन गर्दै एकताको अनुभव गर्दछ। यही दृष्टिले नै मनुष्य, पशु, पंक्षी, कीरा-फट्याङग्रा जीव मात्रमा ईश्वरको दर्शन गर्दछ, प्राणीहरूप्रति आत्मीयता र दया भाव राख्दछ। त्यसैले, नाग हाम्रा लागि पूज्य एवं संरक्षणीय छ। प्राणीशास्त्रका अनुसार नागका असंख्य प्रजातिहरू छन् जसमा विषले भरिएको नागको संख्या धेरै कम छ। नाग हाम्रो कृषि सम्पदाको नाश गर्ने जीवहरूबाट रक्षा गर्नुहुन्छ। पर्यावरण रक्षा र वनसम्पदामा पनि नागको महत्त्वपूर्ण भूमिका रहेको छ। नागपञ्चमी पर्व नागहरू एवं अन्य जीवहरूप्रति सम्मान, सम्बर्द्धन एवं उनीहरूको संरक्षणको लागि प्रेरणा दिन्छ। यो पर्व प्राचीन समयअनुरूप आज पनि हाम्रो अन्तर्दृष्टिमा उत्तिकै आवश्यकता एवं प्रासंगिक छ। जय गुरुदेव !

# आफ्नो हात आफैं हेरौं

### कान्छी औंला

अंग्रेजीमा यसलाई 'फिंगर अफ मरकरी' अथवा 'लिटल फिंगर' भनिन्छ । यसको मूलमा बुध पर्वतको स्थान छ । प्रत्येक व्यक्तिको हातमा यो सबै औंलाभन्दा छोटो हुन्छ । यदि यो औंला साहिँली औंलाको नङसम्म पुग्दछ भने त्यो व्यक्तिले जीवनमा अत्यन्त उच्चस्तरीय सफलता प्राप्त गर्दछ तथा महत्त्वपूर्ण पदमा आसीन हुन्छ । यो औंला जति धेरै लामो हुन्छ त्यति नै धेरै शुभ मानिन्छ । यस्तो औंला भएको व्यक्ति सफल प्रशासक एवं सफल साहित्यकार हुन्छ । यदि यो औंला साहिँली औंलाको माथिल्लो भागभन्दा पनि लामो छ भने यस्तो व्यक्ति सेक्रेटरी अथवा आई.ए.एस. अधिकारी हुन्छ। यी व्यक्तिहरूलाई आकस्मिकरूपमा धन लाभ हुन्छ र जीवनको उत्तरार्द्ध अत्यन्त सफलताका साथ व्यतीत हुन्छ ।

यदि यो औंला असाधारण रूपबाट लामो देखिन्छ भने यस्तो व्यक्ति बुद्धिजीवी हुन्छ तथा उसमा अरुलाई प्रभावित गर्ने क्षमता हुन्छ । यदि यो औंला अत्यन्तै छोटो छ भने त्यो व्यक्ति कुराको मर्मलाई धेरै चाँडै बुझ्न सक्ने हुन्छ र तुरुन्त निर्णय लिनमा समर्थ हुन्छ । यदि यसको अधिको भाग चुच्चो परेको छ भने यस्तो व्यक्ति बुद्धिमान्, सूक्ष्म दृष्टिसम्पन्न तथा वाक्पटु हुन्छ । यदि अधिको भाग वर्गाकार छ भने यस्तो व्यक्तिमा तर्क गर्ने विशेष क्षमता हुन्छ तथा आफ्नो भाषणको माध्यमबाट मानिसलाई प्रभावित गर्ने क्षमता राख्दछ । यदि माथिको भाग चेप्टो छ भने वैज्ञानिक तथा मेशीनरीको काममा रुचि राख्ने हुन्छ । यदि कान्छी औंलाको पहिलो पर्व लामो छ भने त्यो व्यक्तिले विज्ञानमा सफलता प्राप्त गर्दछ । यदि दोस्रो पर्व लामो छ भने त्यसले परिश्रमको माध्यमबाट व्यापारमा विशेष सफलता अर्जित गर्दछ । यदि यसको तेस्रो पर्व लामो छ भने यस्तो व्यक्ति चतुर हुन्छ, तर उसमा असत्य बोल्ने भावना बढी हुन्छ। यदि यो औंला अनामिकाको बराबर लामो छ भने यस्तो व्यक्ति उच्चस्तरको दार्शनिक तथा बुद्धिमान् हुन्छ । यदि यो औंला माझी औंला बराबर लामो देखिन्छ भने त्यो व्यक्ति आफ्नो कार्यमा विश्वविख्यात् हुन्छ । वास्तवमा कनिष्ठिका औंला जति मात्रामा लामो हुन्छ त्यति नै धेरै शुभ मानिन्छ । क्रमश:

जय गुरुदेव !

# वरुण मुद्रा र सूर्य मुद्रा

आत्माले परमात्मा प्राप्तिको बाटोमा अग्रसर हुँदै जाने क्रममा विभिन्न क्रम वा उपक्रमलाई आत्मसात् गर्नुपर्ने विभिन्न पाटोमध्येको एउटा महत्त्वपूर्ण पाटो मुद्रा हो जसले परमात्माबाट आएका दिव्य शक्ति र तरंगलाई निश्चित मार्गबाट प्रवाहित बनाउँदै सम्बन्धित सूक्ष्मातिसूक्ष्म अंगहरूलाई क्रियाशील गराई पुनर्ताजगी दिन्छ जसबाट व्यक्तिभित्र निष्क्रिय र शक्तिविहीन अवस्थामा रहेका ग्रन्थि वा प्राणशक्ति प्रवाह हुने नाडीहरूलाई आवश्यक बल प्रदान गरी शक्तिशाली बनाउँछ ।

पत्रिकाका अघिल्ला अङ्कहरूमा पञ्चतत्त्वसँग सम्बन्धित विभिन्न मुद्राहरूको बारेमा जानकारी गराउने प्रयास भइसकेको छ । हातका पाँचवटा औँलाहरू यिनै पञ्चतत्त्वको प्रतिविम्बित स्वरूप भएकोले यिनै हातका औँलाहरूको उचित समन्वयबाट शरीरभित्र रहेका पञ्चतत्त्वको घटबढलाई सन्तुलनमा ल्याउन सकिन्छ भने त्यसको घटबढबाट उत्पन्न हुने सम्बन्धित रोग र समस्याहरूलाई यिनै मुद्राको अभ्यासले समाधान गर्न सकिन्छ। यिनै विभिन्न मुद्राहरूमध्ये केही महत्त्वपूर्ण मुद्राहरूका बारेमा तल प्रस्तुत गरिएको छ–

**वरुण मुद्रा**

यो मुद्रा पञ्चतत्त्वमध्येको जलसँग सम्बन्धित छ । वरुण भन्नाले पानी अथवा जल भन्ने बुझिन्छ। यो तत्त्व पाँच औँलामध्ये कान्छी औँलासँग सम्बन्धित हुन्छ भने कुण्डलिनी चक्रको आधारमा यो तत्त्वको मणिपूर चक्रसँग सम्बन्ध रहेको हुन्छ। मुख्य प्राणवायुको आधारमा व्यान वायु र स्थानको आधारमा मणिपूर चक्रबाट शुरु भई पूरै शरीरभरि नै फैलिएर रहेको हुन्छ ।

**अभ्यास विधि–**

पद्मासन वा सुखासनमा सजिलोसँग बस्ने,
दुवै आँखा बन्द गरी ढाडलाई सिधा राख्ने,

कान्छी औँलाको टुप्पोलाई बूढी औँलाको टुप्पोमा चित्रमा देखाए झैँ राख्ने,

दुवै हातको औँला मिलाई अन्य चोरी औँला, माझी औँला र साहिँली औँलालाई सीधा पारेर राख्ने ।

यी औँलाहरूलाई मिलाई एकाग्रताका साथ ४०-४५ मिनेटसम्म अभ्यास गर्न सकिन्छ ।

**सूर्य मुद्रा**

यो मुद्रा सूर्यसँग सम्बन्धित रहेको छ । भगवान् सूर्यलाई अग्निको साक्षात् स्वरूप मानिन्छ भने अग्निको स्रोतको रूपमा पनि सूर्यदेवलाई मान्ने गरिन्छ । त्यसैले पनि आगोको ज्वाला जहिले पनि आफ्नो मूलस्वरूप सूर्यदेवतर्फ ऊर्ध्वगामी भएको पाइन्छ। जलको मूलस्रोत समुद्र मानिन्छ र जलको स्वभाव अधोगामी हुन्छ । औँलाको आधारमा बूढी औँला र यो औँला अग्नि तत्त्वको प्रतिविम्बको रूपमा रहेको छ । यो मुद्रा कुण्डलिनी चक्रको आधारमा मणिपूर चक्र, मुख्य प्राण वायुको आधारमा समान वायु र शारीरिक क्षेत्रको आधारमा नाभि तथा आसपासको क्षेत्रमा रहेको हुन्छ । यसको अभ्यास गर्ने तरीका तल प्रस्तुत गरिएको छ ।

**विधि–**

पद्मासन वा सिद्धासनमा दुवै आँखा बन्द गरी ढाडलाई सीधा गरी बस्ने ।

साहिँली औँलालाई बूढी औँलाको फेदमा राखी बूढी औँलाले साहिँली औँलालाई अलिकति थिच्ने, बाँकी औँला सीधा राख्ने ।

दुवै हातका औँलाहरूलाई यस मुद्रामा राखी ४०-४५ मिनेट अभ्यास गर्ने ।

**फाइदाहरू–**

वरुण मुद्राको फाइदामध्ये यसबाट शरीरको सुख्खापना हट्छ, छालालाई नरम, चम्किलो र सुन्दर बनाई अनुहारलाई आकर्षक बनाउँछ । छालाको रोग, रगतमा देखिने खराबी, जलतत्त्वको अभावबाट हुने रोगहरूका साथै अनुहारको दाग, चाया र पोतोलाई पनि यस मुद्राले फाइदा पुऱ्याउँछ ।

सूर्य मुद्राका फाइदाहरूमध्ये यसले मोटोपना कम गर्दछ, शरीरलाई सन्तुलित बनाउँछ, शरीरमा ऊष्णता बढाई पाचनशक्तिलाई मजबुत बनाई शारीरिक तनावलाई हटाउँछ, रगतमा देखिने बोसो (कोलेस्टेरोल) कम गराउँदछ भने चिनी रोग (डाइबिटिज) र लिभरको समस्यामा लाभ मिल्दछ ।

कफ प्रकृति, दम, रुघा, पिनास, बाथका बिरामीले वरुण मुद्राको अभ्यास धेरै गर्नु हुँदैन ।

सूर्य मुद्रा अत्यन्तै कमजोर व्यक्तिले धेरै अभ्यास गर्न हुँदैन र गर्मीको बेला पनि यस मुद्रालाई धेरै बेरसम्म गर्न हुँदैन ।

जय गुरुदेव !

# ब्रह्मचर्य

श्री श्री महायोगी गुरु गोरखनाथले ब्रह्मचर्यसम्बन्धी दिनुभएका अनेकौं उपदेशहरूमध्ये एउटा महत्त्वपूर्ण उपदेश प्रस्तुत गरिन्छ–

**ब्यंद ही जोग ब्यंद ही भोग। ब्यदं ही हरै चौसठि रोग ॥**

**या बिंद का कोई जांणै भेव। सो आँप करता आपै देव ॥**

योग साधकले अति नै ध्यान पुऱ्याउनु पर्ने वीर्य रक्षा हो। वीर्य रक्षाबाट नै योग र भोग दुवैको सिद्धि हुन्छ। वीर्यको पुष्टिबाट नै शरीरको शक्ति बनिरहन्छ र व्यक्ति सदा स्वस्थ र निरोगी रहन्छ। उसका चौसठ्ठी रोग सबै नष्ट हुन्छ। जो योगी वा साधकले वीर्यको रहस्य बुझ्दछन्, उनीहरू स्वयं नै सृष्टि गर्न सक्ने ब्रह्म हुन्छन् र स्वरूपमा स्थित परब्रह्म परमात्माका अभिन्न हुन्छन्।

**ब्रह्मचर्यबाट हुने फाइदाहरू–**

**आयुस्तेजो बलं वीर्यं प्रज्ञा धीश्च महायशः।**

**पुण्यं च मत्प्रियत्वं च प्राप्यते ब्रह्मचर्यया ॥ –वृद्धगौतमस्मृति**

ब्रह्मचर्यबाट दीर्घायु, तेज, बल, वीर्य, प्रज्ञा, लक्ष्मी, महायश, पुण्य र परमात्माको प्रियत्व प्राप्ति हुन्छ।

**एकतश्चतुरोवेदा ब्रह्मचर्यं तथैकतः। –जिनधर्मविवेक**

एकातिर चारै वेद र अर्कोतिर ब्रह्मचर्य दुवै बराबर हुन्छ। अर्थात् एक नैष्ठिक ब्रह्मचर्य पालनले त्यो श्रेय प्राप्त हुन्छ जुन चारै वेदहरूको पठनबाट प्राप्त हुन्छ। **माण्डुक्योपनिषदमा भनिएको छ–** सत्य, तप, सम्यक ज्ञान र यसको साथ नैष्ठिक ब्रह्मचर्य आदिले आत्माको प्राप्ति हुन्छ।

**अथर्ववेदमा भनिएको छ–**

**ब्रह्मचर्येण तपसा देवा मृत्युमपाघ्नत।**

**इन्द्रो ह ब्रह्मचर्येण देवेभ्यः स्वराभवत् ॥**

ब्रह्मचर्य र तपबाट नै देवताहरूले मृत्युलाई जिते भने इन्द्रले पनि ब्रह्मचर्यद्वारा नै देवताहरूमा सर्वश्रेष्ठत्व प्राप्त गरे।

**एकमेव व्रतं श्लाघ्यं ब्रह्मचर्यं जगत्त्रये।**

**यद्विशुद्धिं समापन्नाः पूज्यन्ते पूजितैरपि ॥**

**–ज्ञानर्णव**

अर्थात्, तीनै लोकहरूमा ब्रह्मचर्य नै एकमेव श्लाघ्य व्रत हो किनकि नैष्ठिक ब्रह्मचर्य पालन गरेका ब्रह्मचारी पूज्य पुरुषहरूबाट पनि पूजित हुन्छ। अष्टाङ्ग संग्रहमा भनिएको छ- नैष्ठिक ब्रह्मचर्य धर्मप्रद, यशोवर्द्धक, दीर्घायु, यस लोक, परलोकमा रसायनसमान फल प्रदान गर्ने, शरीर-मनलाई निर्मलाता प्रदान

**स्कन्दपुराणमा भनिएको छ– अप्रसन्न, रोगी, गर्भिणी, व्रत बस्ने, रजस्वला र मैथुन इच्छा नभएकी पत्नीका साथ जबर्जस्ती समागम गर्नु हुँदैन । साथै मनुका अनुसार कामार्त हुँदा पनि रजस्वला पत्नीका साथ कहिल्यै समागम गर्नु हुँदैन । साथै उनको साथ एउटै ओछ्यानमा पनि सुत्नु हुँदैन ।**

गर्नेहरूमा सर्वश्रेष्ठ छ ।

**ब्रह्मचर्य पालन एक चुनौति–**

वर्तमान युगमा मानिसको भोग विलासपूर्ण जीवन बिताउने बानी र उच्छृङ्खलतामा डुब्ने प्रवृत्तिको विकासको कारणले ब्रह्मचर्य पालन मानिसका लागि ठूलो चुनौति साबित भएको छ भने ब्रह्मचर्य पालन आफैमा कठीन कार्य भएको कुरा पनि विभिन्न शास्त्रहरूमा पाइन्छन्–

**पुष्पं दृष्ट्वा फलं दृष्ट्वा दृष्ट्वा यौषितयौवनम् ।**
**त्रीणि रत्नानि दृष्ट्वैव कस्य नञ्चोलते मनः ॥**

भगवान् रामचन्द्रले लक्ष्मणलाई प्रश्न गर्नुहुन्छ– 'हे लक्ष्मण ! सुन्दर पुष्प, फल र स्त्रीहरूको यौवन यी तीन रत्नहरूलाई देखेर कसको मन विचलित नहोला र ?

शृङ्गारशतकमा पनि भनिएको छ– वायु, जल र पात सेवन गर्ने विश्वामित्र र परासर ऋषि पनि स्त्रीको सुन्दर मुखकमल देखेर मोहित हुन पुगे भने फेरि चामल, घिउ, दूध, दहीयुक्त भोजन सेवन गर्ने मानिसको इन्द्रिय स्त्रीलाई देखेर किन अनियन्त्रित नहोस् ? यदि त्यस्ताको इन्द्रिय निग्रह हुन्छ भने त्यो विन्ध्यपर्वत समुद्रमा तैरनु जस्तै आश्चर्य हुन्छ ।

**नाल्पसत्वैर्न निःशीलैर्न दीनैर्नाक्षनिर्जितैः ।**
**स्वप्नेऽपि चरितुं शक्यं ब्रह्मचर्यमिदं नरैः ॥**
**–ज्ञानार्णव**

अर्थात्, दुर्वल मन भएका, शील, स्वभावरहित, पापी र इन्द्रियहरूद्वारा जितिएका मानिसहरूबाट ब्रह्मचर्य व्रतको आचरण स्वप्नमा पनि हुन सक्दैन ।

धेरै मानिसहरू ब्रह्मचर्य पालना गर्न सक्दैनन् किनकि उनीहरू खाने, पिउने, हेर्ने, सुन्ने जस्ता कुरामा संयमित हुन सक्दैनन् । भोगीहरू नाटक, सिनेमा, अश्लील पत्रपत्रिका र फोहोरी गफमा लीन रहन्छन्, विलासी गीत-सङ्गीतको रस लिने गर्दछन् । त्यस्ताहरू ब्रह्मचर्य पालन गर्न असमर्थ हुन्छन् । भोगी-विलासीहरू स्वादका लागि शरीरलाई अनेक वस्तु प्रदान गरी दुर्गन्धित तुल्याउँछन् । त्यसैले, विचारको विकारले मनलाई वशमा राख्न पनि कठीन हुन्छ र विचलित भई नियम पालना गर्न सक्दैनन् । आफ्ना त्रुटीलाई नित्य दर्शन नगरी आफूभित्रका कुना-कुनामा बसेका विकार नचिन्ने काम-विलासी ब्रह्मचर्यको पालन गर्न असमर्थ हुन्छन् ।

**ब्रह्मचर्यमा रहने उपायहरू–**

तामसिक खानपानबाट बच्नु, खराब संगत नगर्नु, स्त्रीसँग अनावश्यक भाषण नगर्नु, स्त्रीको अधिकभन्दा अधिक स्मरण तथा परिकल्पना नगर्नु, स्त्रीको बारेमा विशेष चर्चा नगर्नु र चित्रमय स्त्रीलाई बढी नहेर्नु, अश्लील पुस्तक अध्ययन नगर्नु, अश्लील चित्र र चलचित्रहरू नहेर्नु साथै सद्गुरुदेवहरूबाट प्राप्त ध्यान, साधना, योग आसन तथा प्राणायामहरूको अभ्यास गर्नु आदिबाट नैष्ठिक ब्रह्मचर्य पालनमा मद्दत पुग्दछ ।

**वीर्य स्थिर गराउने केही साधन :**

निम्नलिखित साधनहरूद्वारा वीर्य स्थिर हुन्छ–

१. सिद्धासनमा प्रमेह नाडीलाई बायाँ खुट्टाको कुर्कुच्चाले थिची कुर्कुच्चामाथि नै शरीर राख्नुपर्दछ । यस आसनमा अढाईदेखि तीन घण्टासम्म बस्नाले प्रमेह नाडीमा वीर्य जम्मा नभएर नाडी शुद्ध हुन्छ र प्रमेह आदि दोष हटेर वीर्य शुद्ध र स्थिर हुन्छ ।
२. सिद्धासनमा बसेर मूल बन्ध गर्ने ।
३. जालन्धर बन्ध पनि गर्ने र वीर्य आकर्षणको मानसिक भावना पनि राख्नु पर्दछ ।
४. अनि कुम्भकमा जब दुवै बन्ध राम्रोसँग लागेको हुन्छ त्यसबखत एउटा कुम्भकमा कम्तिमा पनि सातपटक प्रमेह नाडी वा वीर्य नलीको ठीक सीधा पर्ने गुदद्वारमाथि लिङ्ग र मेरुदण्डको बीचको भागलाई आकर्षण-विकर्षण गर्नुपर्दछ । जसरी लोहारको खलातीले हावा लिने र फ्याँक्ने गर्दछ त्यसैगरी आकर्षण र विकर्षण गर्नुपर्दछ । तर याद राख्नु पर्दछ कि छातीतर्फ आकर्षण नगरी पेट फुलाउनु पर्दछ । यो सबै शक्ति र सबै इच्छा मूत्र नली र वीर्य नलीको आकर्षणमा लागोस् । आकर्षण यसरी होस् कि मूत्र नली, वीर्य नली र गुदा चक्रसम्म आकर्षण हुन सकोस् । यो आकर्षण तथा विकर्षण यस्तो हुनुपर्दछ कि पेट फुलाउँदा यतिसम्म फुलोस् कि सहन सकेसम्म फुलोस् । संकोच पनि यति संकोच होस् कि पेट बिल्कुल मेरुदण्डसँग गएर मिलोस् । यसप्रकारले मृतक वीर्य पनि जीवित हुन्छ । सूर्य चक्र अर्थात् नाभिमा आएर मस्तिष्कतर्फ आकर्षण हुन थाल्दछ यसले सूर्य चक्रको तन्तुहरूमा यति कम्पन हुन्छ वीर्यको तत्त्वस्वरूप ओज सूक्ष्म ग्याँसको रूपमा मस्तिष्कमा जान्छ र त्यही नै तेज, प्रकाश वा कान्ति भएर चम्कन्छ । यस्तो प्राणायाम तीनदेखि आरम्भ गरी पाँच पटकसम्म गर्नुपर्दछ ।
५. यस साधनसाथ यदि पिसाब गर्ने समयमा ४-५ पटक पिसाबको धारलाई बलपूर्वक माथितिर खिच्ने गरेमा अरु बढी फाइदा हुन्छ । यसबाट वीर्यवाही स्नायुहरूमा शक्ति उत्पन्न हुन्छ र विकृत पदार्थ बाहिर आउन थाल्दछ । जुन बखत गुदा, लिङ्ग र नाभिसम्मको मध्य भागको आकर्षणको झट्का मस्तिष्कको मध्य भागमा लाग्न सकोस् तब यो साधन सफल भएको सम्झनुपर्दछ । पेट सञ्चालन गर्दा मूत्र वीर्यनलीमा माथितिर खिचिएको अवश्य याद गर्नुपर्दछ ।
६. विभिन्न प्राणायामको अभ्यासबाट ।

**सन्दर्भ ग्रन्थहरू–**
**स्वास्थ्य विज्ञान– खप्तड बाबा**
**वैद्यकीयसुभाषितसाहित्यम्–**
**डा. भाष्कर गोबिन्द घाणेकर**

(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन्। सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ ।)

# छेपारी फर्कने रोग चट्...

गुरु कृपा नहुन्जेल कुनै उपाय नहुने रहेछ। गुरु कृपा भएपछि कसरी आफै परिवर्तन हुँदोरहेछ... सानो अनुभव प्रस्तुत गर्नको लागि सद्गुरुदेवहरूसँग अनुमति माग्दछु ।

मेरो एउटा सानो बेकरी व्यवसाय छ। म त्यसैमा रमाइरहेको थिएँ। एकदिन गोरक्ष निखिल वाणीको प्रचार-प्रसार गर्ने सौभाग्य पनि प्राप्त गरेको थिएँ। म सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय सिन्धुली, रातमाटामा नै कार्यरत छु । म आश्रममा २०६२ फाल्गुण २९ देखि जोडिएको हुँ। परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पा यसरी पनि एकजना साधकलाई प्राप्त हुने रहेछ जसको बारम्बार स्मरणबाट मलाई अपार हर्ष र आनन्द भइरहेको छ। मेरो जीवनमा गुरु कृपा यसरी बर्सियो कि सम्झँदा पनि आफैलाई आश्चर्य लाग्छ । मेरो शरीरमा छेपारी फर्कने रोग थियो जुन गुरु कृपाबाट अचम्मलाग्दो किसिमले बिसेक भयो । एकपटक गुरुदेव स्वयं प्रकट हुनु भई मलाई दर्शन दिनुभयो ।

सौभाग्य भनौं अथवा दुर्भाग्य, मैले अहिलेसम्म तालिम भने लिएको छैन । तर पनि म प्रत्येक बिहीबार गुरु पूजन गराउँछु। गुरु पूजन गराउँदा पनि गुरुदेवसँग दर्शन भेट भयो ।

एकदिनको कुरा हो, गुरु पूजन गराइसकेर बेलुकी निदाउन मात्रै के लागेको थिएँ, दुवैजना गुरुदेवहरू प्रकट हुनुभयो र आदेश गर्नुभयो– 'हे शिष्य ! म सिन्धुली आश्रममा धेरै खुशी छु, अबदेखि तिमीहरूले पूजन गराउँदा धोती र कमिज लगाएर गर्दा अझ राम्रो हुन्छ र आरती गर्दा एक अर्कालाई नछोई लाइनमा राख्नू ।' म निद्राबाट बिउँझिँदा त मेरो अगाडि कोही पनि हुनुहुन्थेन । मैले आफूलाई सम्हालेर मनमनै गुरुदेवहरूसँग प्रार्थना गरेँ– 'हे गुरुदेव ! हजूरले जे जति आदेश दिनुभएको छ सो हामीहरू पालन गर्नको लागि तयार छौं ।' यसपछि म फेरि त्यही ओछ्यानमा ढल्कें ।

यस्ता दिव्य र आनन्दप्रद गुरु कृपाहरू सधैंभरि सबै साधक साधिकालाई प्राप्त भइरहोस् भन्ने शुभेच्छा पनि प्रकट गर्दछु। जय गुरुदेव !

–देवबहादुर कार्की
क.न.पा.७, पानीट्याङ्की, सिन्धुली

# पितृलोकमा प्रवेश

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।**

'...थिइन्। तिनी (यक्षिणी) आइन् र भनिन् कि अब हामी यहाँबाट अन्तै कतै जाँदैछौं। त्यसपछि फेरि अन्य कुरा थाहा पाउँदै जाउँला।' मैले तिनीसँग अनुरोध गर्दै एकपटक ती केटी (नाम बिर्सिएको तर आँखा र अनुहार चाहीं याद थियो) सँग भेट गराइदिनका लागि भनें। तिनी मुसुक्क मुस्कुराइन् र भनिन्– 'किन ? मनपर्‍यो ? तर तिमीले चाहना गर्दैमा अब तिनीसँग भेट्न सकिँदैन, याद गर्दै गर्नू, तिनले चाहिन् भने चाहिँ भेट हुनेछ।' त्यसपछि हामी त्यहाँबाट प्रस्थान गर्‍यौं। तर मेरो मस्तिष्क (सूक्ष्मताको भाषामा) हराइरहेको थियो। यो अचम्मको लोक रहेछ। एउटा घटनाले अर्को परिवेश निर्माण गर्दै जाने र प्रत्येक परिवेशभित्र विविध प्रकारका अवस्था चित्रित हुने रहेछ। त्यही चित्र-विचित्रभित्र कैयौं आत्माहरू अलमलिइरहेका हुने रहेछन्। हुन त शुरुमा मैले यक्षिणीलोक र यक्षिणीलाई तल्लो तहको ठानेको थिएँ। तर मैले सोचेजस्तो रहेनछ। पृथ्वीतटमा हुने प्रत्येक अवस्थामा यक्षिणीलोकको योगदान रहेछ। यक्षिणीलोकको योगदान हुनुमा प्रत्येक यक्षिणीले पृथ्वी र पृथ्वीवासीप्रति गर्ने माया नै प्रमुख कारण रहेछ। प्रत्येक अवस्थामा फरक-फरक ढंगबाट यक्षिणीहरूले मद्दत गर्दा रहेछन्। प्राकृतिक मनोरम दृश्यबाट आकर्षण गर्नको लागि यिनीहरूले त्यस प्रकारको ऊर्जा त्यहाँ प्रदान गर्दा रहेछन्। मनुष्य जीवनमा आइपर्ने अभाव, न्यूनता, दरिद्रता सम्पूर्णलाई निराकरण गरिदिने रहेछन्। शिक्षाको क्षेत्रमा लागेकाहरूलाई यिनीहरू (यक्षिणी) ले इच्छा गरेको खण्डमा एउटा उत्तम लेखकमा रूपान्तर गरिदिँदा रहेछन्। त्यहाँ यिनीहरू भाव शरीरको माध्यमबाट काम गर्दा रहेछन्। शृङ्गारिक सामग्रीमा सजावटस्वरूप आफ्नो परिचय दिँदा रहेछन्। संगीतअन्तर्गत यिनीहरू पूर्णरूपबाट सूक्ष्म शरीरको माध्यमबाट मद्दत गर्ने रहेछन्। युवा-युवती जीवनलाई ऊर्जामय, आकर्षणमय बनाउँदा रहेछन्।

यक्षिणीहरूको उपस्थितिले मनुष्य जीवनलाई सफलीभूत पार्न मद्दत पुग्ने रहेछ। यी विविध कुरा यक्षिणी लोकबाट पृथ्वीतटमा रहेका कार्य हेर्नासाथ नै थाहा पाउन सकिँदो रहेछ। यी सम्पूर्ण गुणै-गुणका बावजुद यक्षिणीहरू ऊर्ध्वमुखी हुन नसकिरहेको, सबै कुरा थाहा पाएर पनि माथिल्लो सत्तामा जान नसक्नुमा यिनीहरूको एउटा कमजोरी रहेछ। त्यो कमजोरी हो–आसक्तिलाई नियन्त्रण गर्न नसक्नु।

मानव शरीरमा स्थित स्वाधिष्ठान चक्रको नजिक एउटा अत्यन्त सूक्ष्म स्वरूपमा रहेको स्थान यक्षिणीहरूका लागि निर्देश गरिएको हुने रहेछ। त्यही विन्दुको माध्यमबाट मनुष्यलाई आफूतिर तान्न यिनीहरू सफल हुँदा रहेछन्। यी यक्षिणीहरूलाई आफ्नो तहको साथी बनाएको मनपर्ने हुँदोरहेछ, प्रेमी-प्रेमिका बनेको मनपर्ने हुँदोरहेछ। उच्चकोटिका ऋषिमुनिहरू पनि सजिलैसँग गिर्नु (तल्लो तहमा झर्नु) मा ती ऋषिमुनिले विचार नगरीकन यक्षिणीलाई दिएको वचन नै प्रमुख कारण हुने रहेछ। समयमा आफूमा भएको आसक्ति (काम भावना) लाई नियन्त्रण नगरी उनीहरूलाई कुन रूपबाट लिएको छ, अपनाएको छ, त्यही रूप पछिसम्म रहने हुँदोरहेछ। त्यसकारण यस्तो परिवेशबाट गुज्रनुपर्ने अवस्थाले मलाई स्वत: नै ज्ञान फुरेर आउन मद्दत पुर्‍यायो– प्रत्येक वस्तु प्राप्त हुनासाथ एकपटक चिन्तन गर्ने शैली, बोलीलाई बाहिर निकाल्नुभन्दा पहिला सोच्ने बानीको विकास र कुनै कुरा (वस्तु, खानेकुरा) खानुभन्दा अगाडि सोचेर, विचार गरेर खाने बानीको विकास।

यिनै कुराहरूले म अझ परिपक्व भएजस्तो लाग्यो। मलाई भित्रैदेखि आनन्द आइरहेको थियो। नयाँ-नयाँ प्रकारका ज्ञान हासिल गर्न पाउँदा खुशी लागिरहेको थियो। मलाई यसैकारणले नै माताले शुरुमा अह्राउनु भएको रहेछ कि यस्ता प्रकारका गूढ ज्ञान प्राप्त गर्न सूक्ष्म सत्ताको माध्यमबाट त्यही ठाउँमा जानु नै प्रयोगात्मक हुने रहेछ, दिगो हुने रहेछ। प्रत्येक कुरा मानव जीवनको अपूर्णतालाई पूर्णता दिनका लागि सृजित भएको हुने रहेछ। यक्षिणी लोकको रहस्यलाग्दो कुरा चाहिँ के रहेछ भने जति बुझ्न खोजे पनि यहाँको बारेमा बुझ्न पूर्णरूपबाट नसकिने रहेछ। एउटा कुरा बुझ्न अर्को झमेलामा पर्नुपर्ने सम्भावना हुने रहेछ। झमेला चाहिँ दु:ख होइन कि भुल-भुलैयामा, रमाइलोमा समय बिताउँदै जाँदा सूक्ष्मतामा कैयौं उपलब्धि गुमाउन पुगिँदो रहेछ। म भाव शरीरको माध्यमबाट गुज्रिरहेको मौका छोपी ती कन्या (यक्षिणी) ले संकेत गर्दा पो झल्याँस्स भएँ। तिनले (यक्षिणीले) मतर्फ हेरेर भनिन् कि अब हामी यक्षिणी लोकबाट मनुष्य

लोकमा जाँदैछौँ । त्यहाँ जाँदा तिमीले बिल्कुल मनुष्य जीवनको याद गर्नु हुँदैन । हामी यहाँको नियमभित्रबाट चल्नुपर्ने हुन्छ । त्यसैले, अब तिमीले आफ्नो सूक्ष्म शरीरलाई यही लोक (यक्षिणी लोक) मुताबिक ढाल्नु (परिवर्तन गर्नु) पर्ने हुन्छ । त्यसपछि तिनले हातले के शक्ति हो मतर्फ प्रवाहित गरिन् । मेरो शरीर परिवर्तन भयो । सबै उस्तै छ, तर अलिकति मेरो शरीर निलो-निलो खालको भयो । पहिरन पनि त्यस्तै हुन पुग्यो । त्यसपछि मलाई तिनले यक्षकुमार (एउटा नाम दिइन्, त्यस नामको बारेमा म यहाँ भन्दिन) को रूपबाट विभूषित गराइन् । हामी एक अर्कामा साथीजस्तो भएर समय बिताइरहका थियौँ । कुनै प्रकारको खराब तरंग आएको थिएन । शायद गुरुकृपा नै होला । त्यसपछि हामी (यक्ष-यक्षिणी) को रूपमा पृथ्वी (मनुष्य लोक) मा जाँदा भयौँ । हामी सजिलै सूक्ष्म शरीरको माध्यमबाट वायुगमन गरिरहेका थियौँ ।

पृथ्वीतटमा आउनुभन्दा केही माथि (हजारौँ मिल करिब) आइपुग्दा आभास हुने रहेछ कि कस्तो-कस्तो गन्ध (बास्ना) आइरहेछ । सूक्ष्म सत्ताबाट पृथ्वी अत्यन्त मनोहर देखिँदो रहेछ । त्यो ठाउँ छाड्नै मनलाग्दो रहेनछ । हामी पृथ्वीतटमा ओर्लियौँ । हामीजस्तै कैयौँ सूक्ष्म सत्ताबाट आएका हुँदा रहेछन् । कोही देवलोकबाट, कोही यक्षिणीलोक, कोही अप्सरालोक, स्वर्गलोक... आदि-आदि ठाउँबाट यहाँ आउँदा रहेछन् । पृथ्वीलोकस्थित स्थानीय देवीदेवताहरूको नियम उपनियमले गर्दा हामी जहाँ मन लाग्यो त्यहीँ जान पाउने रहेनछौँ । शुरुमा त ममा मनुष्य शरीरजस्तै प्रवृत्ति हावी भएर जान लाग्दा तिनले रोकिन् र वास्तविकता बताइन् । यसरी यस रूपमा पनि नियम भंग हुँदा देवीदेवताको श्राप भोग्नु पर्ने हुँदोरहेछ । मलाई मनुष्य शरीरको आफ्नो इलाकामा जान मन लाग्यो । त्यसपछि त्यहाँ जानको लागि सूक्ष्म अनुमति माग्यौँ– प्रार्थना गरेर । तर अचम्मको कुरा के भने स्थूलतामा थाहै नपाएका देवीदेवता त्यस इलाकाको हुनुहुँदो रहेछ । उहाँहरूले मनुष्य सत्तामा जस्तै सूक्ष्मतामा पनि स्वागत गरेर आफ्नो इलाकामा जानको लागि अनुमति दिनुभयो । हामीले आत्मिक नमन गर्दै इलाकामा प्रवेश गऱ्यौँ । बिहानको लगभग सात बजेको थियो । एकजना स्थूलतामा रहेको साथीको घरमा गयौँ । देख्नासाथ नै 'जय गुरुदेव'को सम्बोधन गरेँ । तर त्यो साथीले चिनेको नचिनेको केही पनि प्रतिक्रिया जनाएन । देखे पनि नदेखे जस्तो गऱ्यो । उसलाई चियाजस्तो ल्याएर एउटी केटीले दिइन् । ऊ आफ्नो धुनमा चियाजस्तो पिउन तल्लीन भयो । ती यक्षिणीलाई साह्रै नमजा लागेछ । मलाई पनि साह्रै खल्लो अनुभव भयो । मैले नजिकै गएर कोट्याएर भनेँ– 'तपाईंले मलाई चिन्नुभएन ?' तिनी मेरो साथी भनेर देखाएँ तर केही पनि प्रतिक्रिया नै छैन । मलाई अचम्म लाग्यो । पछि पो मलाई ज्ञात भयो कि हामी सूक्ष्ममा छौँ भनेर । शायद त्यसै भएर होला त्यो साथी नबोलेको । उसले त साधना पनि गर्दथ्यो, ध्यान पनि गर्दथ्यो, सूक्ष्मताको कुरा पनि गर्दथ्यो । महसुस गर्नुपर्ने हो, तर गरेन । मलाई एक प्रकारले क्रोध पनि उठ्यो । यसैगरी कैयौँ देवीदेवताहरू सूक्ष्मतामा मनुष्यहरूलाई मद्दत गर्न आउँदा उल्टो अपहेलित भएर फर्केर जाँदा, अनायास नै श्रापित भएर मनुष्य जीवन नाजुक भएको हो कि जस्तो लाग्यो, मलाई । त्यसपछि हामी अर्को ठाउँमा गयौँ । त्यो पनि मेरो साथी नै थियो । ऊ साधना र पूजा सकेर प्रार्थना गर्दै रहेछ । सूक्ष्मबाट उपस्थित हुनुभएका समस्त देव-देवी, यक्ष-यक्षिणी...मा आत्मिक अभिवादन ! यस्तै-यस्तै शब्दब्रह्म प्रयोग गरी प्रार्थना गर्दा हामीलाई खुशी लाग्यो । उक्त साथीलाई आध्यात्मिक सहयोग (Spiritual help) गर्न मन लाग्यो ।

अज्ञानताभित्रको ज्ञानबाट कसरी शक्ति र कृपा प्राप्त गरिन्छ भन्ने कुरा मैले यहाँ आएर बुझेँ । साथै, ज्ञानभित्रको अज्ञानताले कसरी प्राप्ति नै गुम्दोरहेछ भन्ने कुरा पनि मैले बुझ्ने मौका पाएँ । वास्तवमा हामीले सूक्ष्मतालाई विश्वास गरी अगाडि बढ्न सक्यौँ भने थुप्रै-थुप्रै मद्दत लिन सकिँदो रहेछ । मनुष्य जीवनभित्र पनि कैयौँ उच्चताका अवस्था सृजित हुने कुराको मूल मर्मलाई बुझेर ऋषिमुनिहरूले मनुष्य जन्म लिँदा रहेछन् । कोही व्यक्ति मनुष्यको भेषमा बसेता पनि ऋषि सत्ताबाट गएका हुँदा रहेछन् भने कोही व्यक्ति देव सत्ताबाट गएका हुँदा रहेछन् । बाँकी तपस्या पूरा गरेपछि आफ्नै लोकमा फर्कँदा रहेछन् । यसकारण, मनुष्य लोकमा समस्त लोकबाट विभिन्न वेशभूषा, आचरणमा रहेका शक्तिस्वरूपले जन्म लिएका हुँदा रहेछन् । प्रत्येक ठाउँमा धेरै समयसम्म रहन नपाउने भएकोले त्यहाँबाट हामी आएका मात्र के थियौँ, त्यहाँ त एकजना योगीसँग हाम्रो जम्काभेट भयो । मैले उहाँलाई अनायास नै साष्टाङ्ग दण्डवत् गरेँ तर उहाँले चरणस्पर्श भने गर्न दिनुभएन । यसको कारण मैले जान्न खोज्दा-नखोज्दै उहाँले 'म मेरो परिचय एवं वृत्तान्त यहाँ बताउन असमर्थ छु । यसका लागि तिमीहरू मेरो गुफा (बस्ने ठाउँ) मा जानुपर्ने हुन्छ । म ठेगाना दिन्छु, त्यहीअनुसार आउनू' भनेर उहाँले साङ्केतिक एवं प्रकाशस्वरूपमा हामीलाई नक्शाजस्तो दिनुभयो र त्यहाँबाट उहाँ अलप हुनुभयो । हामी घोर अचम्ममा पऱ्यौँ । उहाँले रहस्य थपेर जानुभयो । 'आउनू' भन्नुभएको छ, नजाउँ भने उहाँको कोप (रीस) हामीउपर आउला । जाउँ भने कसरी जाने ? आदि कुराले साह्रै धर्मसङ्कट तुल्यायो ।

उहाँ (योगीज्यू) ले दिनुभएको नक्शा देख्दा सामान्य थियो तर त्यसमा यस्ता जटिल अवस्था थिए जुन हामीले पार गर्नु नै पर्ने थियो । हाम्रो लागि योगीज्यूको आशीर्वाद र श्राप दुवै टाउको (हामी) माथि घुमिरहेको थियो । अलिकति विलम्ब हुँदा उहाँको श्राप पर्न सक्ने अवस्था थियो । हाम्रो कारणले योगीज्यूलाई कुराउन पनि भएन । त्यहाँ पुग्नको लागि हामीमा क्षमता विकास गर्नुपर्ने थियो । सबैभन्दा पहिला निलो रङ्गमा परिणत हुनुपर्ने थियो । मेरो शरीर त सजिलै निलो भयो । यसो हुनुमा मेरो पहिले नै निलो शरीर थियो । हामी दुवैजना त्यहाँ जानको लागि निमन्त्रित भएकाले उनको (यक्षिणी) शरीर पनि निलो बनाउनुपर्ने थियो । परिणत हुनको लागि तिनलाई साह्रै गाह्रो भयो । हामी त्यहाँ सँगै नै जानुपर्ने थियो । साह्रै सूक्ष्म सङ्कट आइपऱ्यो ।

मलाई गुरुको याद आयो । तुरुन्त सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई आह्वान गरेँ तर पनि उहाँहरूको सूक्ष्म उपस्थिति भएन । म साह्रै चिन्तित भएँ । सूक्ष्ममा मैले उहाँलाई भेट्न नपाएकोमा साह्रै दुःखित भएँ । सूक्ष्म शरीरमा त्यहीँ नै ध्यान गर्न थालेँ । तर तिनी भने मेरै नजिक बसिरहिन् । म जति चिन्तित थिएँ, तिनी (यक्षिणी) त्यति चिन्तित थिइनन् । के कारण हो मैले बुझ्न सकिनँ । ध्यानमा डुब्दै जाँदा गुरुहरूबाट मलाई एउटा निर्देशन प्राप्त भयो । उक्त निर्देशन कसरी निलो रङ्गको प्रकाशमा परिणत हुने भन्ने थियो । त्यसको लागि सूक्ष्म शरीरले (जसले चाहेको हो, स्थूलतामा लगभग १०८ घण्टा पर्न आउँदो रहेछ) एउटा नाम स्मरण गरेर बस्नुपर्ने हुँदोरहेछ । तपस्या भङ्ग भएको खण्डमा उक्त प्रकाश शरीर प्राप्त नहुने रहेछ । उक्त नाम म यहाँ उल्लेख

गर्न असमर्थ छु ।

जब म ध्यानबाट बाहिर आएँ, तिनी मप्रति आशान्वित भइन् । मैले वृत्तान्त बताएपछि तिनी साह्रै खुशी भइन् । मलाई दुईपटकसम्म उनले सोधपूछ गरिन् र ध्यानमा उक्त नाम स्मरण गरी बसिन् । १०८ घण्टाको साधनाको समाप्ति हुन लाग्दा उनी (यक्षिणी) भित्रबाट एक प्रकारको तातो बाफजस्तो निलो रङ्गको प्रकाश निस्कियो । हेर्दाहेर्दै उक्त प्रकाश एउटा आकृति (सङ्केत) जस्तो भयो । साथै मेरो सूक्ष्म शरीर पनि त्यसरी नै रूपान्तरण भयो जसरी उनको (यक्षिणी) भएको थियो । यसपछि दुईवटा सङ्केत-पुञ्ज एक अर्कामा नजिक हुन पुगे र एक अर्कामा जोडिएका जस्ता हुनपुगे । उक्त सङ्केत शरीर निलो प्रकाशमा स्वत: नै जोडिनासाथ त्यहाँबाट उड्न शुरु गऱ्यो ।

त्यसपछिको हाम्रो कार्यदिशा (योगीज्यूको भनाइअनुसार) आकाश मार्गमा ठीक २०० मिटरजति माथि गएर पूर्वतर्फ १,००० किलोमिटर जति गएर तल भूमिमा झर्नुपर्ने थियो । हामी त्यही सुझावअनुसार गयौँ । जब हामी त्यहाँ पुगेका थियौँ हाम्रो सङ्केत शरीर स्वत: नै जमिनको स्पर्श पाउनासाथ दुईवटा सङ्केतमा रूपान्तरण भयो । त्यसपछि स्वत: नै पूर्ववत् अवस्थामा फर्कियो र हाम्रो अलग-अलग दुईवटा सूक्ष्म शरीर भयो । त्यसपछि केही समय हामीले त्यहीं नै प्रतीक्षा गर्नुपर्ने थियो । हामी प्रतीक्षा गर्दै रह्यौँ । त्रिशूलजस्तो आकृतिमा एउटा सङ्केत प्राप्त भएपछि त्यस शक्तिपुञ्जको पीछा गरी सीधै उत्तरतर्फ हिँडेर जानुपर्ने थियो ।

कुर्दा-कुर्दा थकितजस्तो हुन लागेका मात्र के थियौँ, योगीज्यूले भन्नुभएको जस्तो त्रिशूलस्वरूपको शक्तिपुञ्ज त्यहाँ आइपुग्नुभयो । हामी हर्षले गद्‌गद् भयौँ । कस्तो अचम्मको घटना । यस्ता प्रकारका घटनाहरू चित्रण हुँदा मलाई एक प्रकारले रमाइलो पनि लागेको थियो, खुशीले गद्‌गद् भएको थिएँ, यी कुराहरू कसैलाई सपनाजस्तो, कल्पनाजस्तो, पत्यारिलो र अपत्यारिलो दुवै लाग्न सक्छ । वास्तवमा यन्त्रको महिमा तथा यन्त्रमा कसरी सजीवता हुन्छ र हामीले यन्त्रलाई किन उच्च सम्मान दिनुपर्छ भन्ने महत्त्व बल्ल बुझेँ ।

यो विचित्रको संसारमा सजीव र निर्जीवको भेद ठम्याउन नै गाह्रो भएको मैले महसुस गरिरहेको छु किनभने निर्जीवभित्र सजीव हुने रहेछ र सजीवभित्र निर्जीव हुने रहेछ । पृथ्वीमा भएका कैयौँ निर्जीव वस्तु सूक्ष्मतामा सजीव भएर काम गरिरहेका मैले पाएँ । फरक यति छ कि कसैले काम गरिरहेको कसैले देख्नैपर्छ भन्ने छैन । यहींनिर (नजिकिँदै जाँदा) आएर ऋषिमुनिहरूले ढुङ्गालाई देवता, देवी मानी पूजा गर्ने प्रथा यसरी नै शुरु गरेका होलान् भन्ने ज्ञान बल्ल बुझ्न पाएँ । ऋषिमुनिहरूमा ढुङ्गारूपी आकृतिमा दिव्य शक्ति आएको अनुभव गर्न सक्ने क्षमता थियो । त्यसैले, उनीहरूले ढुङ्गामा देवता देखी पूजा गर्न थाले । त्यहीं भित्रबाट सबै कुरा पाउने बानी पर्न थाल्यो र केही नभएको जस्तो ठाउँबाट पनि सबै कुरा पाउन सम्भव भयो किनकि ऋषिहरूसँग ज्ञान थियो । त्यसैले, ऋषिमुनिले सम्पूर्ण प्राप्ति गर्न सक्ने मनुष्य जीवन भएकोले यसलाई उत्तम जीवन भनी वर्णन गरे । निर्जीवभित्रको सङ्केतमा शक्ति हुने रहेछ ।

अँ साँची, म त्रिशूल शक्ति आएको कुरा गर्दै थिएँ । उहाँलाई हामीले नमन गऱ्यौँ । त्यसपछि हामीलाई पहिलेको सङ्केत स्वरूपमा परिणत हुनको लागि उहाँले आदेश गर्नुभयो । हामी सोहीअनुसार रूपान्तरित भयौँ । जब हामी संयुक्तरूपको सङ्केतमा परिणत भयौँ, त्रिशूलरूपको शक्तिले हामी (सङ्केत) लाई आफूमा समाहित गर्नुभयो । हामी सङ्केत (सिम्बोल) भएता पनि सबै कुरा थाहा पाउन सक्थ्यौँ । आत्माको रूप हुँदैन, रङ्ग हुँदैन, आकार हुँदैन भन्थे, यही अवस्थाको चित्रण गरेर यसो भनिएको होला भन्ने कुरा मैले त्यस समय ठानेँ किनकि आवश्यकतानुसार आत्माले आफूलाई विसर्जित गर्दै अगाडि बढ्दै गयो ।

कुन मार्गबाट कहाँ जाने, के-के गर्ने ती सम्पूर्ण त्रिशूल शक्तिबाट स्वत: नै हुँदै गयो । विश्रामस्थल आइपुगेपछि हाम्रो यात्रा रोकियो । त्यसपछि हाम्रो सङ्केतस्वरूप विभिन्न रूपमा विभक्त भयो । हामी दुई रूपमा परिणत भयौँ । उक्त त्रिशूलस्वरूप तीनमा परिणत भयो । सबै सूक्ष्मस्वरूप (शरीर)मा परिणत भएपछि हामी निलो स्वरूपमा थियौँ । तर उहाँहरू (त्रिशूल) रातो, पहेँलो र सेतोरूपमा प्रकट हुनुभयो । हामीलाई प्राप्त निर्देशनअनुसार अब हामी सेतो रङ्गको निर्देशनमा लाग्नुपर्ने थियो । त्यसपछि अन्य दुई स्वरूप पहेँलो र रातो त्यहाँबाट अलप हुनुभयो । कहाँ जानुभयो केही बुझ्न सकिएन ।

हामी तीनजना सूक्ष्म शरीरमा विभक्त थियौँ । त्यसपछि हामी योगीज्यूको अभ्यर्थनामा नमस्कार गर्दै रह्यौँ । योगीज्यू प्रकट हुनुभयो तर टाढैबाट हामीलाई दर्शन दिएर आशीष प्रदान गर्दै हामी तीनमध्ये मलाई मात्र निर्देशन गर्दै भन्नुभयो– 'अब तिम्रो यात्रा सीधै दक्षिण-पूर्वतिर हुनेछ । त्यहाँसम्म पुग्नको लागि तिमीलाई व्यवस्था हुनेछ । उनीहरू दुईजना मेरो कुटीमा आऊन् । ' त्यसपछि उहाँ अन्तर्धान हुनुभयो । एकछिनको समय पनि बित्दा नबित्दै त्यहाँ एउटा आगोको तप्काजस्तो मण्डप आइपुग्यो । त्यो सुविधा मेरो लागि रहेछ । म त्यहाँ बस्न लाग्दा उनी (यक्षिणी) सँग बिछोडिनु पऱ्यो । अलि खल्लो अनुभव भयो । तर पनि मेरो यात्रा निश्चित भइसकेको थियो । तिनी चाहिँ हाँसिराखेकी थिइन् ।

एकैछिनमा म धेरै टाढा भएँ । म बसेको विमान अर्थात् मण्डपजस्तो सीधै जलमा प्रवेश गऱ्यो । जल भित्रभित्रै गएर पूर्व दिशातिर लाग्यो । यति धेरै छिटो गतिमा हुइँकिइरहेको थियो कि म त्यसको व्याख्या गर्न नै सक्दिन । बडो राम्रो ठाउँ आइपुग्यो, अचम्मको संसार आइपुग्यो, खण्ड-खण्ड भएको जस्तो । नक्शाको रूपबाट भन्नुपर्दा एउटा विशाल रङ्गशाला जहाँ तह-तहका मानिसहरू बस्ने गर्दछन् । टाढा-टाढा हेर्दा सुन्दर सानो बस्तीजस्तो देखिन्थ्यो । तर नजिक पुग्दा एउटा खण्ड नै आँखाले देखुन्जेलको थियो । त्यहाँ रहने बासिन्दाहरू सबै पृथ्वीतटका नै थिए । कोही दुब्ला, कोही मोटाघाटा, कोही साह्रै पीडित, कोही हँसिला खालका देखिन्थे । माथितिर फर्केर हेर्दा हेरुन्जेलको बस्ती र तलतिर हेर्दा पनि हेरुन्जेलको बस्ती । अति रमणीय । तर सुरुङ्गजस्तो कस्तो-कस्तो । कसरी व्याख्या गर्ने ? मसँग शब्द नै छैन ।

यहाँको सबै कुरा बताउन चाहेर पनि मसँग उपयुक्त शब्द नभएकोले क्षमा चाहन्छु । त्यो तह-तहचाहिँ फरक-फरक संस्कारकाहरू फरक-फरक ठाउँमा बस्नको लागि बनाइएको रहेछ । त्यहाँका बासिन्दाहरू बडो जिज्ञासु भावमा मलाई हेर्न थाले । कसैले चिनेजस्तो गरे, कसैले नचिनेजस्तो गरे । मलाई अवश्य पनि यो अर्कै लोक हुनुपर्छ भन्ने लाग्यो र गुरुसँग प्रार्थना गरी सोधेँ, 'म त योगीज्यूको कृपाबाट थाहा नपाइकन पितृलोकको भ्रमणमा रहेछु । साह्रै खुशी लाग्यो । म अगाडि बढ्न लागेको मात्र... । क्रमश:

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ता हुने हवन कार्यक्रमहरूमा सोमबार श्री शिव गोरक्ष हवन, मंगलबार तान्त्रोक्त वटुक भैरव हवन, बुधबार तान्त्रोक्त महालक्ष्मी हवन र बिहीबार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रमहरू क्रमश: आषाढ २ गते पशुपति मृगस्थलीस्थित गोरक्षपीठ, आषाढ ३ गते लगनखेलस्थित वटुक भैरव मन्दिर, आषाढ ४ गते लगनखेलस्थित महालक्ष्मी मन्दिर र आषाढ ५ गते पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न गर्‍यो । उल्लेख्य भक्तजन साधक साधिकाहरूको सहभागिता रहेको उक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त बटुक भैरव हवन बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म सञ्चालन भएको थियो भने अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएका थिए । १ घण्टा सञ्चालित हवनमा सहभागी हुँदा मात्रै पनि सजिलैसँग परमपूज्य सद्गुरुदेवहरू र देवीदेवताको कृपा, आशीर्वाद प्राप्त गर्न सकिने उक्त कार्यक्रमहरूमा भक्तजन, साधक साधिकाहरूको सहभागिता दिनानुदिन बढ्दो छ ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यस धर्तीमा १९३३ अप्रिल २१ तारीखमा डा. नारायण दत्त श्रीमालीस्वरूपमा अवतरित हुनुभएको पावन दिनको सम्झनामा सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीखमा मनाउँदै आएको दिव्य गुरु महोत्सव कार्यक्रम गत आषाढ महिनाको ७ गते शनिबार (जुन २१, २००८) गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा सम्पन्न गर्‍यो । बिहान १०:१५ बजेदेखि प्रार्थना, निखिल स्तवन, गोरक्ष स्तवनको सामूहिक पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रमको पहिलो चरणमा दिव्य गुरु चरण पादुका पूजन, मन्त्रजप, हवन, गुरु आवाहन भजन, आरती सम्पन्न भयो । उक्त अवसरमा प्रसाद वितरणको अभिभारा वहन गर्दै गुरु पूजन गर्ने सौभाग्य साधिकाहरू चिनु सिंखडा, रमा सिंखडा र श्रद्धाले पाउनुभएको थियो । कार्यक्रम सञ्चालन सावर पन्थी नं.३ का सदस्यज्यूले गर्नुभएको थियो ।

दोस्रो चरणको शुभारम्भमा गुरुसेवा दल नं.६ का सदस्य साधक सुबिन अर्यालले स्वागत मन्तव्य राख्नुभयो । दोस्रो चरणको कार्यक्रमअन्तर्गत भजन-कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन-स्ववचन आदि रहेका थिए ।

प्रवचन-स्ववचनको क्रममा सावर पन्थी नं. १ का सदस्यज्यूले प्रभुको चरणमा समर्पित हुन सक्ने योग्य पुष्पको रूपमा आफूलाई ढाल्ने चेष्टा गर्नुपर्ने सल्लाह दिनुभयो । त्यस्तै सावर पन्थी नं.२ का सदस्यज्यूले भन्नुभयो- 'गुरुकार्य गर्न पाउनु स्वयंमा गर्वपूर्ण तपस्या हो र सौभाग्य पनि हो ।' 'वैदिक कालखण्डका ऋषिहरूले, विभिन्न युगका युगपुरुषहरू श्री रामचन्द्र, भगवान् श्रीकृष्ण स्वयंले समेत गुरुकुलमा बसेर गुरु आदेशअनुसार कठीनतम गुरुकार्यहरू गर्नुभएको प्रसंग उद्धरण गर्दै उहाँहरूको तपस्या (तपोकार्य) गर्दाको स्थिति सुविधा आदिको वर्णन गर्दै सोको तुलनामा हामी धेरै सुविधाभोगी भएर गुरुकार्य गर्न पाएका छौं तथापि हामी गुरुकार्यको तपस्याबाट अनेक बहानामा पछाडि सर्दछौं, यो हाम्रै दुर्भाग्य हो' उहाँले उक्त अवसरमा भन्नुभयो । प्रवचनकै क्रममा सावर मातृका नं.४ की सदस्यज्यूले सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यस धरामा मानव देह धारण गरेर लोककल्याणको लागि अवतरित हुनुभएको दिन भएकोले २१ तारीखको महत्त्व विशेष रहेको कुरामाथि प्रकाश पार्नुभएको थियो ।

कार्यक्रममा विद्याश्रमका भाइ-बहिनीहरूले कर्णप्रिय गीत तथा नृत्य प्रस्तुत गरेका थिए । गोरक्ष निखिल वाणी पत्रिकाको वार्षिक सदस्यता विस्तार योजनामा सहभागी हुने साधक साधिकाहरूलाई सावर पन्थी नं. १ र २ का सदस्यज्यूहरूले 'विशेष धारण माला' तथा सद्गुरुदेवहरूको दिव्य तस्वीर उपहारस्वरूप प्रदान गर्नुभएको थियो । ५० जना पत्रिका सदस्य बनाउने साधक श्यामकुमार खड्का तथा २० जना सदस्य बनाउने साधक कृष्णकुमार के.सी., साधिका विष्णुकुमारी तुम्बाहाम्फे र साधक गणेश महर्जन पुरस्कृत हुनुभएको थियो । जतिसुकै रकम तिरेर पनि प्राप्त गर्न नसकिने गोरक्ष निखिल शक्तियुक्त प्राणप्रतिष्ठित उक्त 'विशेष धारण माला' प्राप्त गर्ने एक मात्र उपाय भनेको गोरक्ष निखिल वाणी पत्रिकाको २०, ५० वा १०० जना वार्षिक सदस्यता बनाउनु हो ।

## ध्यान कक्षाहरूको शुभारम्भ

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्रले तान्त्रिक ध्यानका कक्षाहरूको नयाँ शृंखला शुभारम्भ गरेको छ । यसअन्तर्गत केन्द्रीय कार्यालय एवं हाल पोखरा, लेखनाथ तथा ललितपुर सम्पर्क कार्यालयहरूमा सम्पन्न भइरहेको सो ध्यान कार्यक्रम आगामी दिनहरूमा अन्य सम्पर्क कार्यालयहरूमा पनि सञ्चालन हुनेछ । हाल पहिलो तथा दोस्रो तहका ध्यान कार्यक्रमहरू सञ्चालन भइरहेका छन् भने आगामी दिनहरूमा अन्य तहका ध्यानका कक्षाहरू एवं तान्त्रिक दीक्षाको कार्यक्रम पनि आयोजना हुने भएको छ ।

# आश्रम गतिविधि

## आध्यात्मिक उप-नेतृत्वकर्ताहरूका लागि तालिम

सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना आफ्ना विभिन्न तहका कार्यकर्ताहरूलाई आध्यात्मिक तालिम प्रदान गर्दै आइरहेकोमा गत असार २० र २१ गते आध्यात्मिक उप-नेतृत्वकर्ताहरूको लागि दुई दिवसीय तालिम कार्यक्रम सम्पन्न गर्‍यो । काठमाडौँको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न भएको उक्त कार्यक्रम प्रार्थना, स्तुति-वन्दनाबाट शुभारम्भ भएको थियो । शुभारम्भपश्चात् गुरु पादुकाको दिव्य पूजन सम्पन्न भएको थियो । प्रथम दिनको पूजनमा साधकहरू किशोर थापा, शेखरनिधि पौड्याल, केशव पाण्डे, विश्वराज दुलालले गुरु पादुकाको दिव्य पूजन गर्ने सौभाग्य पाउनु भएको थियो भने दोस्रो दिनको पूजनमा साधिकाहरू सजना योगी, निशा विष्ट, सोनिया कुँवर, मिङ्मे शेर्पाले उक्त अवसर पाउनु भएको थियो । कार्यक्रमको पहिलो दिन कार्यकर्ता छनौट तथा तालिम उप-विभागका उप-संयोजक गु.से.द.नं.१८का सदस्य साधक भुवनराज पाण्डेयले स्वागत मन्तव्य राख्नु भएको थियो ।

तालिममा नयाँ विषयहरू आउने क्रममा यसपटक अझ नौलो किसिमका र गुढ रहस्यले भरिएका विषयहरू प्रशिक्षणमा समावेश भएका थिए । तालिममा भगवान् बुद्ध, भगवान् राम, भगवान् अल्लाह, भगवान् क्राइष्टमा के फरक छ, लामा तन्त्रमा के छ, हाम्रो आश्रम धर्म विशेष हो कि अध्यात्म विशेष, प्रचारप्रसार केन्द्र, आरती सञ्चालन केन्द्र भनेको के हो, आन्तरिक जिज्ञासा भनेको के हो, जीवन भनेको के हो, असल जिवन कसरी जिउने, व्यवहार र विश्वास भनेको के हो, ध्यान के हो ज्ञान के हो, कसरी मनको शान्ति प्राप्त गर्ने आदि विषयमा प्रशिक्षण प्रदान गरिएको थियो भने प्रयोगात्मकरूपमा विशेष ध्यानको टेक्निक पनि प्रशिक्षार्थीहरूले प्राप्त गर्नुभएको थियो ।

तालिममा काठमाडौँ, भक्तपुर, ललितपुर, गोरखा, कास्की, चितवन, तनहुँ, काभ्रेबाट प्रशिक्षार्थीहरू सहभागी हुनु भएको थियो । तालिम कार्यक्रमको अन्त्यतिर ग्रेडिङ्ग सुनाइएको थियो । उक्त ग्रेडिङ्गअनुसार आध्यात्मिक उप-नेतृत्वकर्ता तहबाट विकसित भएर कार्यकर्ताहरू क्रमश: शोभा सापकोटा, बाबुराम श्रेष्ठ, हृदयराम महर्जन, नवीनकुमार श्रेष्ठ, इन्दिरा सापकोटा, प्रेमबहादुर थापा, रामकृष्ण जि.सी., श्यामकुमार गिरी, तप्तबहादुर थापा र बलराम कार्की आध्यात्मिक सह-नेतृत्वकर्ता तहमा प्रवेश गर्न सफल हुनु भएको थियो । कार्यकर्ताहरूले गुरुकार्यमा खट्न थप उर्जा प्राप्त गर्ने अवसरका रूपमा लिइने गरेको यस्तो तालिम कार्यक्रममा प्राप्त हुने विषयवस्तु तथा ग्रेडिङ्ग परमपूज्य सद्गुरुदेवहरूबाट प्राप्त हुने गर्दछ ।

## महाप्रयाण दिवस सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्र नेपालले परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको १० औँ महाप्रयाण दिवसको अवसरमा असार १९ गते विशेष मन्त्रजप कार्यक्रम सम्पन्न गरेको छ । सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले भौतिक शरीर त्यागेर सिद्धाश्रम प्रयाण गर्नुभएको दिनको सम्झनामा महाप्रयाण दिवस मनाउँदै आइरहेको छ ।

काठमाडौँको बसुन्धरामा रहेको आश्रम भवन हातामा सम्पन्न महाप्रयाणमा दिवसमा सयौँ साधक-साधिकाहरूले पहेँलो चादरमा सजिएर आसन ओछ्याएर परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको निखिल मन्त्र जप अनुष्ठानमा भाग लिनु भएको थियो । पालभित्र र आश्रम भवनका विभिन्न कक्षमा व्यवस्थित पाराले साधक-साधिकाहरूलाई राखिएको थियो । साधक-साधिकाहरूले विभिन्न ठाउँमा बसेर मन्त्र जप गर्नुभएको थियो । शान्त र दिव्य वातावरणमा सम्पन्न कार्यक्रममा साधक-साधिकाहरूले जपेको संख्यालाई सम्बन्धित ठाउँमा टिपाउने व्यवस्था गरिएको थियो ।

बिहान ९:०० बजे प्रार्थनाबाट शुभारम्भ गरिएको मन्त्र जप अनुष्ठानमा साधक साधिकाहरूलाई छुट्टाछुट्टै बस्ने व्यवस्था गरिएको थियो । साँझ ४ बजेसम्म चलेको कार्यक्रममा प्रत्येक जप गर्ने कक्षमा दर्शनका लागि परमपूज्य सद्गुरुदेवहरूको श्रीफोटो, पादुका सजाइएको थियो ।

त्यस्तै, सिद्धाश्रम शक्ति केन्द्रका नेपालभरिका सम्पर्क कार्यालयहरूमा मन्त्र जप अनुष्ठान सम्पन्न भएको थियो । काठमाडौँ उपत्यकाका भक्तपुर, ललितपुरलगायत चितवन, गोरखा, कास्की, स्याङ्जा, सिन्धुली, लमजुङ, सर्लाही, काभ्रेपलाञ्चोक, सिन्धुपाल्चोक, तनहुँ आदि जिल्लाहरूमा रहेका सम्पर्क कार्यालयहरूमा पनि निखिल मन्त्र जप अनुष्ठान सम्पन्न भए भने नेपालगञ्ज, सुर्खेत आदि ठाउँहरूमा रहेका प्रस्तावित सम्पर्क कार्यालयहरू र केही आरती संचालन केन्द्रहरूमा पनि उक्त कार्यक्रम सम्पन्न भएको थियो ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज पृथ्वीमा मानव कल्याणका लागि सिद्धाश्रमबाट डा. नारायण दत्त श्रीमालीका रूपमा भौतिक देह लिएर पदार्पण गर्नुभएको थियो र आफ्नो कार्यावधिलाई सम्पन्न गरेर उहाँ पूर्व नियोजित कार्यक्रमअनुसार पुन: सिद्धाश्रम फर्कनुभएको थियो । स्मरणीय छ, परमपूज्य सद्गुरुदेवले पृथ्वीमा रहनु हुँदा मन्त्र, तन्त्र, यन्त्र, ध्यान, योग, सम्मोहन, समुद्र विज्ञान, हस्तरेखा, ज्योतिष, साधना आदि अनेकौँ विषयमा सयौँ पुस्तक पुस्तिकाहरू लेख्नुभएको थियो । ज्योतिषमा मात्र उहाँका पचासभन्दा बढी पुस्तकहरू प्रकाशित भएका थिए । विभिन्न पुरस्कार, मान-सम्मानबाट विभूषित परमपूज्य सद्गुरुदेवले सन् १९९८ को जुलाई ३ मा महाप्रयाण लिनु भएको थियो ।

### विन्ध्यवासिनी हवन

परमपूज्य सद्गुरुदेवहरूको असीम अनुकम्पा, कृपा एवं आशीर्वादस्वरूप कास्की जिल्लामा माता विन्ध्यवासिनीको तान्त्रोक्त हवन सम्पन्न भयो । हरेक महिनाको पहिलो बुधबार सम्पन्न हुने उक्त हवन असार ४ गते सम्पन्न भएको थियो । माता विन्ध्यवासिनीको प्रसिद्ध मन्दिरको प्रांगणमा सम्पन्न भएको उक्त हवन बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

## गुरुदेवसँगको पहिलो भेट

गुरु एकक्षण रोकिनुभयो, फेरि बोल्नुभयो– तिमीले आनन्द, समाधिको बारेमा सोध्यौ, यसको उत्तर अत्यन्त कठिन छ–

**सैषानन्दस्य मीमांसा भवति । युवा स्यात्साधुयुवाध्यापक आशिष्ठो द्रढिष्ठो बलिष्ठस्तस्वेयं पृथिवसर्वाक्तिस्य पूर्णा स्यात । स एको मानुषानन्दाः**
**ते ये शतं मानुषा आनन्दाः । स. एको मनुष्यगन्धर्वाणामानन्दः । श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतं मनुष्यगन्धर्वाणामानन्दः श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतं देवगन्धर्वाणामानन्दाः स एकः पितृणां चिरलोका लोकामानन्दाः । श्रोत्रियस्यचाकामहतस्य ।**
**ते ये शतं पितृणां चिरलोका लोकामानन्दाः । स एक आजानजानां देवानामानन्दः । श्रोत्रयास्यचाकामहतस्य ।**
**ते ये शतमाजानजानां देवानामानन्दाः स एकः कर्मदवाना देवानामानन्दः, ये कर्मणा देवानपियन्ति। श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतं कर्मदेवानां देवानामानन्दाः स एको देवानामानन्दः श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतं देवानामानन्दाः स एक इन्द्रस्यानन्दः श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतमिन्द्रस्यानन्दाः । स एको बृहस्पतेरानन्द श्रोत्रियस्यचाकामहतस्य ।**
**ते ये शतं बृहस्पतेरानन्दाः स एकः प्रजापतेरनन्दः श्रोत्रियस्य चाकामहतस्य ।**
**ते ये शतं प्रजापतेरानन्दाः । स एको ब्रह्मण आनन्दः । श्रोत्रियस्य चाकामहतस्य ।**
**स यश्चार्य पुरुषे यश्चासावादित्ये स एकाः स य एवं विदस्माल्लोकप्रययों । एकमन्नमय मात्मानमुपसंक्रामति । एवं प्राणमय मात्मानमुपसंक्रामति । एवं मनोमयमात्मानमुपसंक्रामति । एवं विज्ञान पयमात्मानमुपसंक्रामति । एतमानन्दमयमात्मानमुपसंक्रामति ॥**

सदाचारी युवक, शिष्य वेदाध्ययनयुक्त, स्वस्थ बलिष्ठ एवं वैभवयुक्त पृथिवीपति होस् त मनुष्य आनन्द मान्दछ ।

मानवको सय आनन्द मनुष्य-गन्धर्वहरूको एउटा आनन्द समान हो । यस्तो आनन्द शुद्ध अन्तष्करण भएको श्रोत्रियले नै प्राप्त गर्न सक्दछ ।

मनुष्य–गन्धर्वहरूको सय आनन्द देव-गन्धर्वहरूको एउटा आनन्द बराबर हुन्छ। जुन मानिसहरूको कामना नष्ट भइसकेको हुन्छ, यस्तो श्रोत्रियलाई नै यस्तो आनन्द प्राप्त हुन्छ ।

देव–गन्धर्वहरूको सय आनन्द पितृलोकमा स्थायीरूपमा रहने पितृहरूको एउटा आनन्द बराबर हुन्छ, कामनायुक्त श्रोत्रियले नै यस्तो आनन्द प्राप्त गर्दछ ।

जो पितृ स्थायीरूपमा पितृलोकमा छन्, त्यसको सय आनन्द आजानज-संज्ञक देवताको आनन्द हो, यो आनन्द कामनामुक्त देववेत्तालाई नै प्राप्त हुन सक्दछ ।

आजानज संज्ञक देवताहरूको सय आनन्द कर्मसंज्ञक देवताहरूको एउटा आनन्द हो, कामनारहित श्रोत्रिय नै यस्तो आनन्दबाट युक्त हुन्छ ।

जो कर्म देवताहरूको सय आनन्द छ, त्यो देवहरूको एउटा आनन्द बराबर छ, यो आनन्द नष्टकाम वेदज्ञले नै प्राप्त गर्न सक्दछ ।

देवहरूको सय आनन्द बराबर वृहस्पतिको एउटा आनन्द हो । जो वेदज्ञ कामनाहरूबाट मुक्त भइसकेको छ, उसले नै यस आनन्दलाई प्राप्त गर्न सक्दछ ।

बृहस्पतिको सय आनन्द बराबर प्रजापतिको एउटा आनन्दसमान हुन्छ, मुक्त काम वेदज्ञले नै

यस आनन्दलाई जान्न सक्दछ ।

प्रजापतिको सय आनन्द बराबर ब्रह्मको एक आनन्द हुन्छ, कामनायुक्त वेदज्ञले नै यस आनन्दलाई भोग्न सक्दछ ।

मनुष्य र सूर्यमा जो निहित छ, त्यो एक नै हो, जसले यसलाई जान्दछ, त्यसले अन्नमय आत्मालाई प्राप्त गर्दछ । उसले नै पछि गएर प्राणमय, मनोमय, विज्ञानमय, आनन्दमय आत्माको साक्षात्कार गरेर आनन्द-समाधि प्राप्त गर्दछ ।

श्री श्री गुरुदेवको शरीरबाट निरन्तर गन्ध निस्किरहन्थ्यो । यस्तो गन्ध उच्च साधकहरूको शरीरबाट नै प्राणित हुन्छ । श्रीकृष्णको शरीरबाट पनि यस्तो गन्ध सदा प्रवाहमान हुन्थ्यो । गोविन्द लीलामृतमा श्रीकृष्णको शरीरबाट निस्कने अष्टगन्धका बारेमा उल्लेख भएको छ– कुरंगमदजिद् वपु परिमलोर्मिकृष्टांगन, स्वकांगनलिनाष्टके शशि युताब्ज गन्धप्रिय:।

मदेन्दुवर चन्दना गुरु सुगन्धि चर्चार्चित:, स मे मदनमोहन: सखि तनोति नासास्पृहाम् ॥

यो अष्टगन्ध यति भव्य मादक एवं सम्मोहक थियो कि सहज नै अरुलाई आकृष्ट गर्ने क्षमता राख्दथ्यो । राधाको शरीरबाट पनि यस्तो गन्ध निस्कन्थ्यो जसको कारण उनलाई 'पद्‌मिनी'को संज्ञा दिइएको थियो ।

मैले एकदिन गुरुदेवसँग यसै प्रसंगमा कुरा गरेको थिएँ– के प्रत्येक साधकले आफ्नो शरीरबाट यस्तो गन्ध प्रवाहित गर्न सक्दछ ? के यो गन्ध स्थायी रहन सक्दछ ?

गुरुदेवले उत्तर दिनुभयो– योगका चार अवस्थाहरूमध्ये पहिलो अवस्थामा नै गन्धनि:सृत साधना सम्पन्न गर्न सकिन्छ तर जहाँसम्म स्थायी गन्धको प्रश्न छ, त्यो तबसम्म सम्भव छैन जबसम्म साधक योगको चतुर्थावस्थामा पुगेको हुँदैन ।

के गुरुदेव, यसप्रकार कुनै पनि गन्धको सृष्टि गर्न सकिन्छ ?

स्वामीले भन्नुभयो– किन हुँदैन ? के तिमी हेर्न चाहन्छौ ?

र, हेर्दाहेर्दै गुलाबको हल्का एवं एकदम मधुरो वर्षा हुन लाग्यो, हामी त भिजेजस्ता भयौं । चारैतिर गुलाबको सुगन्ध भरिन गयो– जस्तो धेरै गुलाबलाई छरिएको होस् ।

मैले भनें– यो त गुलाबको सुगन्धको वर्षा हो, तर यो स्थायी त रहन सक्दैन ।

स्वामीले भन्नुभयो– गएर बाहिरबाट ढुंगा लिएर आऊ । म ढुंगा लिएर स्वामीकहाँ गएँ । स्वामीले भन्नुभयो– यस ढुंगामा कस्तो गन्ध छ ?

मैले भनें– कुनै पनि गन्ध छैन ।

–तिमी यो ढुंगामा कस्तो सुगन्ध चाहन्छौ ?

मैले भनें– अष्टगन्ध, जस्तो श्रीकृष्ण वा महाप्रभु चैतन्यको शरीरबाट निस्कन्थ्यो, जस्तो गन्धहरूमा उल्लेख हुन्छ, यो गन्ध मृगमद, कपूर, नीलोत्पल, चन्दन, अगरु, तुलसी मंजरी आदि सुगन्धित द्रव्यहरूको सम्मिश्रण थियो ।

स्वामीले ढुंगा मेरो हातबाट लिनुभयो, केही समय हावामा राखेर मेरो सामु राख्नुभयो । त्यस ढुंगाबाट एक प्रकारको अद्‌भुत सुगन्ध निस्किरहेको थियो जसलाई मैले पहिले कहिल्यै अनुभव गरेको थिइन ।

–के यो सुगन्ध स्थायी रहन्छ ?

–रहन्छ, तिमी चाहन्छौ भने यस ढुंगालाई आफूसँगै राख, स्वयं अनुभव गर्नू ।

कैयौं वर्षसम्म त्यो ढुंगा मसँगै रह्यो । जहिले जहिले मैले त्यस ढुंगालाई सुँघ्थें, म तन्मय हुन पुग्थें । एउटा अनौठो दिव्यलोकमा पुग्दथें । कैयौंपटक मानसिक तनावको बेला त्यस ढुंगालाई सुँघेर समाधिस्थ भएको थिएँ । अस्तु । क्रमश:

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**हृद्यम्बुजे कर्णिकमध्यसंस्थं**
**सिंहासने संस्थितदिव्यमूर्तिम् ।**
**ध्यायेद् गुरुं चंद्रकलाप्रकाशं**
**चित्पुस्तकाभीष्टवरं दधानम् ॥१११॥**

**भावार्थः** हृदयकमलको मध्यमा विराजमान दिव्य मूर्ति, चन्द्रमाको कलासमान प्रकाशमान, वेदज्ञानले युक्त, शिष्यहरूलाई अभीष्ट वरदान दिनुहुने गुरुदेवलाई म अनन्त भावपूर्ण हृदयले ध्यान गर्दछु । आफ्नो हृदयमा गुरु मूर्तिको ध्यान गर्नुपर्छ । यस प्रक्रियामा साधकले हृदयकमलको आसनमा गुरु स्वरूपलाई स्थापना गरेर, ध्यानावस्थामा उहाँको चिन्तन गरेर, विशेष गरेर उहाँको चरणको ध्यान गरेर मनको एकाग्रता वृद्धि गर्दछ ।

**श्वेताम्बरं श्वेतविलेपपुष्पं**
**मुक्ताविभूषं मुदितं द्विनेत्रम् ।**
**वामांक पीठस्थित दिव्यशक्तिं**
**मन्दस्मितं सान्द्रकृपानिधानम् ॥११२॥**

**भावार्थः** मानव विग्रहरूपमा सेता वस्त्र धारण गर्नुभएका, सेतो चन्दन लगाउनु भएका, सेता फूलहरूको मालाले सुशोभित, सौभाग्यशाली, मुक्तामणिको मालाले शोभायमान, प्रसन्नताका प्रतिमूर्ति, दिव्यतम, तेजस्वी, द्विनेत्रधारी, जसका देब्रेपट्टि दिव्य शक्तिसम्पन्न भगवती जगदम्बा सुखद दिव्यतम आसनमा विराजमान हुनुहुन्छ, मन्द हाँसो र अनन्त करुणाले परिपूर्ण पूज्यपाद गुरुदेवलाई म ध्यान गर्दछु ।

**यस्मिन्सृष्टि स्थितिध्वंस-**
**निग्रहानु ग्रहात्मकम् ।**
**कृत्यं पंचविधं शश्वद्**
**भासते तं नमाम्यहम् ॥११३॥**

**भावार्थः** जुन गुरुत्वमा सृष्टि-निर्माण, त्यसको पालन, त्यसको संहार, शिष्यहरूमाथि कृपा गर्नु एवं श्राप आदि दिनु यी पाँच गुण निरन्तर समाहित रहन्छन्, त्यस गुरुलाई म श्रद्धायुक्त भावले नमस्कार गर्दछु । गुरुत्व त्यस शक्ति समूहको नाम हो जसमा यस ब्रह्माण्डको संचालिका शक्ति परिपूर्ण छ । गुरुत्वशक्ति परम सत्ताभन्दा भिन्न छैन किनभने शिष्यहरूको कल्याणार्थ मानव विग्रह धारण गरेपछि उपरोक्त पाँचै गुण त्यस विग्रहात्म रूपमा विद्यमान रहन्छन् । तसर्थ, उहाँ सदैव वंदनीय हुनुहुन्छ ।

**यो गुरुः स शिवः प्रोक्तः**
**यः शिवः स गुरुः स्मृतः ।**
**विकल्पं यस्तु कुर्वीतः**
**स नरो गुरुतल्पगः ॥११४॥**

**भावार्थः** जो गुरु हुनुहुन्छ, उहाँ नै शिव हुनुहुन्छ । शिवले नै गुरु रूपमा अवतरित भएर शिष्यहरूको कल्याण गर्नुहुन्छ । जसले गुरु र शिवमा अन्तर ठान्दछ त्यस्ता व्यक्तिलाई गुरुवंचक भनिन्छ । शरीरको अन्तरलाई अन्तर मानिन्छ तर शिव र गुरु त शक्तिरूप हुनुहुन्छ, तत्त्वमय हुनुहुन्छ, ज्ञानमय हुनुहुन्छ, चिदानन्दमय हुनुहुन्छ, उहाँहरूलाई फरक गरेर जान्नै सकिँदैन । साक्षात् शिवले नै गुरुरूपी विग्रह धारण गरेर शिष्यहरूलाई पूर्णता प्रदान गर्नुहुन्छ ।
जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

आत्मीय पाठकवर्ग, परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य स्वरूपको बारेमा जान्नु र बुझ्नु हामी मनुष्यको वशको कुरा होइन। तैपनि यस स्तम्भमार्फत केही मात्रामा श्री निखिलेश्वर शतकम्लाई क्रमशः प्रकाशित गर्दै लगिएको छ। यस प्रयासबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ भन्ने कुरामा हामी विश्वस्त छौं।

॥९५॥

रुग्णाय स्वास्थ्यमददात् स्वकृपार्द्रदृष्ट्या,<br>
यन्निर्धनाय धनमज्ञधियै प्रबोधम् ।<br>
शान्तिं समाश्रितपदान् स्फुट-सिद्धिकोषं;<br>
वन्दे महापुरुष ! ते चरणारविन्दम् ॥

पूज्य गुरुदेव निखिलेश्वरानन्दज्यूलाई मानिसहरू कल्पवृक्षसँग तुलना गर्दछन्, जसको घना छायाँमा जीवनका अभीष्ट स्थितिहरू स्वत: निर्मित हुन पुग्छन्। जसले एकपटक निष्कपट हृदयले पूर्ण निश्छल चित्तका साथ उहाँका चरणकमलहरूको आश्रय लियो, उसलाई उहाँले खुलेर आफ्नो तपस्या र सिद्धिहरूको अतुलित रत्नकोष बाँडेर मालामाल गरिदिनु हुन्छ– यसका प्रचुर प्रमाणहरू छन् । हे गुरुवर ! हजूरका कृपालु चित्तका कारण शरणमा आउने रोगीहरूलाई आरोग्य प्रदान गरिदिनु भयो, गरिबलाई धन, वैभव; अज्ञानीहरूलाई ज्ञान तथा निष्काम भावले हजूरको चरणको आश्रय लिनेहरूलाई शान्तिको दान दिनुभयो । तसर्थ, हे अनन्त सिद्धिहरूका प्रस्फुट रत्नकोषस्वरूप महापुरुष ! म हजूरका महिमामण्डित चरणकमलको सतत आराधना गर्दछु ।

॥९६॥

प्रेम्णोत्थितं मधुरझंकृतिसिद्धनादं,<br>
प्रेम्णात्नु भावितसुधाभृतगीतिरागम्<br>
ताद्रूप्यसारमपि तद् हृदि प्रार्थयन्ती;<br>
वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥

हे गुरूप्रवर ! निखिलेश्वर ! मेरा इष्टदेवता श्रीकृष्णलाई साक्षात् प्रेमावतार भनिएको छ जसका प्रेममा बाल-वृद्ध, नर-नारी, सम्पूर्ण पशुपक्षी र यहाँसम्म कि रुख, लहरासमेत मुग्ध हुन्थे र हजूर उहाँकै नयाँ संस्करण हुनुहुन्छ । हजूरको प्रेमपूर्ण रीति, नीति पनि हजूरको सम्पर्कमा आउने मानिसहरूमा बहुचर्चित छ। प्रभु ! म त्यही शुद्ध प्रेमलाई आफ्नो जीवनमा उतारेर श्रीकृष्णको बाँसुरीको एउटा सार्थक रागिनीको अलाप बन्न चाहन्छु। तसर्थ, हे गुरुदेव ! हजूरसँग विशुद्ध प्रेमबाट उत्पन्न मधुर झंकारले झंकृत नाद माग्दछु । परम प्रेमको अनुभूति गराउने, अमृतरसले भरिएको गीतमय राग तथा परम प्रेममय परमेश्वरका साथ तद्रूपताको सामर्थ्य प्राप्तिका लागि हृदयदेखि हजूरको चरणारविन्दमा परम प्रीतनिष्ठ वन्दना गर्दछु ।

जय गुरुदेव !

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ। हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन्।*

### इष्टदेवता

कुलदेवता भनेजस्तै आफ्नो कुलले मान्ने, विशेषरूपमा आदर-सम्मान गर्ने देवदेवीलाई इष्ट देवदेवीको रूपमा मान्ने गरिन्छ। विशेष गरी आफ्नो कुलले इच्छाएको, बढी मनपर्ने, बढी मान-सम्मान गरिने देवतालाई नै इष्टको रूपमा मान्ने गरिन्छ। इष्ट देवदेवी आफ्नो कुलअनुसार पनि हुने गर्दछ र व्यक्तिअनुसार पनि हुने गर्दछ। कुलले विशेषरूपमा मान्ने

पनि इष्ट हुन सक्छन् । व्यक्तिलाई विशेष मनपर्ने, अरुभन्दा बढी उहाँकै आराधना गर्न मन लाग्ने र विशेषरूपमा मान्ने देवतालाई इष्टको रूपमा मान्ने गरेको पाइन्छ । यसरी मानिने इष्टदेव वा इष्टदेवी जे पनि हुन सक्छ । कसैले देवतालाई आफ्नो बनाउन सक्छन्, कसैले देवीलाई आफ्नो इष्ट बनाउन सक्छन् । यसरी मानिने इष्टहरू पहिले-पहिले कुलले मान्दै आएको पनि हुन सक्छ । कसैको पूर्वजन्मदेखि नै मानिआएका देवीदेवता पनि यो जन्मको इष्टदेवता वा देवी हुन सक्छन् भने कसैले यस जीवनमा नै कुनै देवीदेवतालाई इष्टदेवताको रूपमा मान्ने गरेको पाइन्छ । जे जसरी मानिएको भए पनि इष्टदेव वा इष्टदेवीले सदैव आफ्नो भक्तहरूको कल्याणका लागि, उनीहरूको उद्धारको लागि, कृपा, आशीर्वाद वर्षाइरहनु भएको हुन्छ । उहाँहरूको कृपा आशीर्वादभित्र मानव कल्याण लुकेको हुन्छ ।

साधनाको सफलतामा इष्टको ठूलो हात रहेको हुन्छ । उहाँहरूले तपाईं हाम्रो कल्याणका लागि सदैव विविधरूपमा कृपा गरिरहने, दिव्य-दिव्य अवसरहरू दिलाइरहने, कसरी भलाइ हुन्छ भनेर अनुकम्पा गरिरहने कार्य गर्नुभएको हुन्छ । इष्टको सहयोग प्राप्त हुँदा साधना सफलतामा अनुकूल स्थिति प्राप्त हुन्छ, सहज स्थितिको सृजना हुन्छ, तल-माथि केही पऱ्यो भने सहयोग प्राप्त हुन्छ । आफ्नो भक्तलाई स्थूलरूपका आमाबाबुले जस्तै र त्यसभन्दा पनि बढी कृपा, आशीर्वाद दिई सधैँ कल्याण गरिरहनु हुन्छ । त्यसैले, इष्टलाई पूर्णरूपले खुशी बनाई अगाडि बढ्नु पर्दछ, उचित आदर-सम्मान गर्नुपर्दछ, स्मरण गर्नुपर्दछ । सामान्य भक्तिभावले पनि इष्टलाई सहजै खुशी गराउन सकिन्छ । त्यसैले, आफ्नो तर्फबाट उचित सम्मान प्रकट गर्न जान्ने व्यक्तिले इष्टको कृपाले आफ्नो जीवनमा धेरै प्रगति गर्न सक्छ, उचाइमा उठ्न सक्छ ।

इष्टको अपमान भयो भने, अनादर गरियो भने उहाँहरू रुष्ट हुन सक्नुहुन्छ । उहाँहरू रुष्ट भएमा साधना सफल हुन गाह्रो हुन्छ । इष्टको आधारमा पनि अन्य देवीदेवताले विश्वास गरेका हुन्छन्, गुरुहरूले पनि विश्वास गर्नुभएको हुन्छ । त्यसैले गुरु र देवीदेवताले इष्टलाई विश्वास गर्नुहुन्छ र इष्टले तपाईं-हामीलाई विश्वास गर्नुहुन्छ । त्यसपछि हामीले सहजरूपमा देवीदेवता र गुरुको कृपा, आशीर्वाद प्राप्त गर्न सक्दछौं । त्यसैले यसरी हेर्दा अन्य देवीदेवता र गुरुको कृपा पनि इष्टमा लुकेको हुन्छ । त्यसैले, इष्ट खुशी हुँदा देवीदेवता पनि खुशी हुनुहुन्छ । त्यसैले, तपाईं हामीले पनि आफ्नो इष्टलाई खुशी बनाई सबैको कृपा र आशीर्वाद प्राप्त गरौं ।

धेरैलाई आफ्नो इष्ट को होला, कसलाई मान्ने होला, कसरी मान्ने होला भन्ने पनि लाग्न सक्छ । आफूलाई थाहा छ भने ठीकै, थाहा छैन भने केवल, 'हे इष्टदेव वा देवी ! हजूरहरू को हुनुहुन्छ, हामीलाई थाहा छैन । हामीलाई कुनै विधि पनि आउँदैन । हजूरहरू खुशी भइदिनुहोस्' भनी केवल सामान्य प्रार्थना गर्दा पनि उहाँहरू खुशी हुनुहुन्छ । कसै-कसैलाई बारबार कुनै एउटा देव वा देवी मात्रै मनमा आइरहने, सपनामा पनि उहाँहरूकै मात्र दर्शन प्राप्त गर्ने, प्रसंगहरू देख्ने आदि भइरह्यो भने उहाँ इष्टदेव वा देवी पनि हुन सक्नुहुन्छ । तर पनि केवल इष्टदेव वा देवीलाई स्मरण गर्दा, आफूले सक्दो भक्ति अर्पण गर्दा पनि उहाँहरूलाई खुशी बनाउन सकिन्छ । त्यसैले, आफ्नो इष्टलाई खुशी बनाऔं साधनामा सफलता प्राप्त गरौं ।

जय गुरुदेव !

# नेपालीको पुकार

सधैँ पद, प्रतिष्ठा, मान, सम्मानको पछाडि दगुरिहेका समाजका यी सभ्यताका ठेकेदार भनाउँदा मानिसहरूले कहिले बुझ्ने गुरुको महत्त्व? कहिले अघि बढ्ने अध्यात्म पथमा? खानु, लाउनु, सुत्नु, हजार, लाख, करोड कमाउनु, २-४ वटा महल ठड्याउनु, घरजम गरेर छोराछोरी पाउनु, छोराछोरीलाई विदेश पठाउनु, यही नै नियति बनेको छ आजको समाजका सभ्य मानिसहरूको। यसैलाई नै समाजले ठूलो ठानिरहेको छ। यही प्राप्तिका पछाडि तपाईँ, हामी सबै कुदिरहेका छौँ। आफ्नो वरिपरि हेर्नुहोस् र तपाईँ स्वयंलाई पनि नियाल्नुहोस्, यदि तपाईँका घरका सदस्यहरु कोही विदेश गएका छैनन् भने समाजबाट तपाईँ करिब-करिब अपहेलित भइरहनु भएको अवस्था हुन सक्छ। अहिले त हालत यस्तो भइसक्यो कि प्रत्येक घरका कोही न कोही विदेश गएकै छन्। यदि गएका छैनन् भने त्यो घरको छोराछोरीको बिहेवारी हुन पनि गाह्रो हुने स्थिति समाजमा आइसकेको छ। भनिन्छ, समाज पविर्तनशील छ। अवश्य नै समाज परिवर्तन हुँदै आइरहेको छ। तर यो परिवर्तनले हामीलाई घाटा पारिरहेको छ कि नाफामा लगिरहेको छ, यो भने सोचनीय विषय बनेको छ। आर्थिक रुपमा त हामीले समृद्धि कमाइरहेका होलाउँ। तर हामीले छोराछोरीलाई विदेश पठाएर नाक ठूलो पारेर समाजमा हिँड्ने बहानामा कतै आफ्नो संस्कृति, आफ्नो परम्परा, आफ्नो धर्म र आफ्नो आस्थामाथि खेलवाड त गरिरहेका छैनौँ? कतै आफ्नो वंशलाई नै विदेशतिर पलायन बनाइरहेका त छैनौँ? सोच्नुहोस् त यदि तपाईँका छोराछोरी कोही विदेश गए भने फर्केर आउने सम्भावना कत्तिको हुन्छ? धेरै कम- तपाईँ यही उत्तर दिनुहुन्छ किनकि यो हामीले देखिरहेका छौँ। विदेशमा हुनेहरूले यस्तो व्यवस्था बनाइदिएका छन् कि त्यहाँ गएपछि फर्किने कुनै बाटो नै रहन्न। त्यसैले पनि हाम्रो देशका युवा पुस्ताहरु सबै पलायन भएर हाम्रो देशका जनशक्तिहरु सबै विदेशिँदै जाने हो भने अन्ततोगत्वा यो देशमा बाँकी के रहन्छ? यदि यस्तै संस्कृति हाम्रो समाजमा हुर्कँदै जाने र तपाईँ, हामी यसैमा नाक फुलाएर बस्ने, यसैमा गर्व गरेर बस्ने र समाजका ठूलाठालु बनेर बस्ने हो भने अबको २०-३० वर्षपछिको समाज कस्तो होला? सायद तपाईँ हामीले परिकल्पना नै गर्न सक्दैनौँ। त्यसैले, समाजमा विकृति त हजारौँ छन्, जता हेरे पनि अहिलेको समाज अस्तव्यस्त नै छ। चाहे त्यो शान्ति सुरक्षाको कुरा होस्, चाहे राजनीतिको कुरा होस्, चाहे अर्थनीतिको कुरा होस्, चाहे संस्कृतिको कुरा होस्, चाहे धर्मको कुरा होस्। तर यो पलायनवादी सोच हाम्रो समाजमा यसरी बढेको छ कि यो सोचले र यो विषयले अरुभन्दा पनि महत्त्व राख्दछ र अझै चिन्ताको विषय यो बनेको छ। त्यसैले यस विषयमा पनि अब हामी सचेत हुनु जरुरी देखिन्छ।

भगवान् शिवको प्रिय यो श्रावण महिनालाई हामी शिव आराधना गरेर मनाउँदछौँ। भगवान् शिवको स्तुति, वन्दना, पूजा, अर्चना यी सबै हाम्रो आस्थाका विषय हुन्। यो भगवान् शिवप्रति हामीले गर्ने समर्पणको द्योतक पनि हो। शिव महिनाको यस क्षणमा हामीले शिव संकल्प गर्नु छ कि अब हामी समाजलाई अध्यात्ममय बनाउनका लागि अग्रसर हुनु छ। समाजबाट युवाहरूको पलायन हुने जुन परिस्थिति छ त्यसलाई अब रोक्नका लागि हामी सबै मिलेर कम्मर कस्नु छ। समाजमा रहेको दरिद्रतालाई जरैदेखि उन्मूलन गर्नका लागि अब हामी लाग्नुपर्ने देखिन्छ। यदि यस्तै अवस्था रहिरहने हो भने न देश रहन्छ, न तपाईँ, हामी नै रहन्छौँ। देश विखण्डन हुनु भनेको हामी सबैको अस्मितामाथिको ठूलो प्रहार हो। देशलाई केही भयो भने भोलि हामीले के भनेर गर्व गर्ने? यो देश कसैको पेवा होइन। कुनै राजनीतिक पार्टी, कुनै व्यक्ति, व्यक्तित्व, कुनै संघसंस्थाले यो देश सिर्जेको होइन। यो देश त श्री श्री महायोगी गुरु गोरखनाथको आशीर्वादले सिर्जिएको भूमि हो। उहाँको कृपा, अनुकम्पा र आशीर्वादले अहिलेसम्म कसैसँग पराधीन नभईकन अडिग भएर अगाडि बढ्दै आइरहेको देश हो। यदि हामीले यो कुरालाई नबुझेर अझै पनि उहाँप्रतिको आस्था, श्रद्धा, भक्ति र विश्वासमा हेलचेक्र्याइँ गर्‍यौँ, खेलवाड गर्‍यौँ भने अबका दिनमा हामी पराधीन हुन नपर्ला भन्न सकिँदैन। त्यसैले, यो श्रावण महिना गोरक्ष महोत्सव हो, यस महोत्सवको पावन अवसरमा हामी सबै मिलेर गोरक्ष आराधना गरौँ किनकि गोरक्ष नै शिव हुनुहुन्छ, शिव नै गोरक्ष हुनुहुन्छ। उहाँप्रति भक्तिभाव प्रकट गरौँ र हामी सबै नेपालीले एकैसाथ, एकै स्वरमा प्रार्थना गरौँ कि 'हे गुरुदेव ! हाम्रो देशको अस्मितालाई बचाउनुहोस्, अब हजूर मात्र एक विकल्प हुनुहुन्छ हजूरको कृपाबिना यो देशको रक्षा हुनै सक्दैन। जब-जब यो देशमा संकटको घडी आएको छ तब-तब हजूरले नै यो देशलाई बचाउनु भएको छ। नेपाल र नेपालीको रक्षा गर्नु भएको छ, यो देश हजूरकै देश हो, यो देशको अस्मिता रक्षा गर्ने जिम्मा पनि हजूरकै छ, हे गुरुदेव ! यो शिव गोरक्ष महोत्सवमा हामी सबै नेपालीको पुकार सुनिदिनुहोस्, हामी सबैको आर्तनाद सुनिदिनुहोस्, नेपाल र नेपालीको शिर सदैव ठाडो राखिदिनुहोस्।'

अस्तु।